प्रकाशक : रत्न पुस्तक भण्डार, काठमाडौँ, नेपाल

प्रथम संस्करण : २०६९
टाइपसेटिङ : फ्रि-ह्यान्ड कम्प्युटर्स, काठमाडौँ
मुद्रक : कञ्चन प्रिन्टिङ प्रेस, काठमाडौँ

**Ishawasya Upanishad**

**ISBN: 978-99933-0-921-5**

# भूमिका

सत्, चित् र आनन्दको जिज्ञासाका प्रति सर्वोत्तम अनुभवहरूको समग्रता पूर्णरूपले उपनिषद्मा उद्घाटित भएको छ । त्यसैले ईशावास्य उपनिषद्को प्रथम मन्त्रमै भनिएको छ :

**ईशको आवास यो सारा जगत्**

**जीवन सबै प्रणीमा उही व्याप्त छ**

**गर्नु सब त्याग उसको नाममा**

**भोग गर त्यति मात्र जो प्राप्त छ**

**नराख तिमी अरूको धनमा वासना ।**

सत् चित् आनन्द भन्नु अथवा ईश्वर वा ब्रह्म भन्नुमा अन्तर छैन । ईश्वरको सर्वव्यापकताको चर्चा ईशावास्य उपनिषद्मा भए जस्तै अन्य उपनिषद्मा पनि छ । उदाहरणार्थ, श्वेताश्वतर उपनिषद्मा भनिएको छः

'एउटै परमेश्वर सबै प्रणीहरूको हृदयभित्र स्थित हुनुहुन्छ, उहाँ सर्वव्यापी तथा समस्त प्राणीहरूको अन्तर्यामी परमात्मा हुनुहुन्छ । उहाँ नै हामी सबैको अधिष्ठाता हुनुहुन्छ । उहाँ नै सबैको साक्षी हुनुहुन्छ; परम चेतन स्वरूप भएको हुनाले उहाँले नै सबैलाई चेतना प्रदान गर्नुहुन्छ ।'

वास्तवमा ब्रह्म र त्यसको विवर्तको विषयमा जिज्ञासा गर्न र थाहा पाउन उपनिषद् वाङ्मय उपनिषद् नै सर्वोत्तम ग्रन्थ हो ।

ब्रह्मको त जिज्ञासा मात्र हुन सक्ने कुरा ब्रह्मसूत्रमा स्पष्ट छ। यो दृश्य जगत् ब्रह्मको छाया मात्र हो - त्यसको विवर्त हो।

उपनिषद्ले मनुष्यको दार्शनिक चिन्तनप्रक्रियालाई उर्वरा शक्ति प्रदान गरेको छ। गम्भीर सागर जस्तै उपनिषद्मा ज्ञानको भण्डार छ। यसमा जो जति भित्र डुब्न सक्यो उसले उति नै ज्ञानरत्नको सङ्ग्रह गर्न सक्दछ।

उपनिषद् वेदान्त भएको हुँदा यसमा वेदको सार छ। यसमा अन्तरनिहित दार्शनिक र आध्यात्मिक सन्देश निरन्तर जीवन्त र अमर छन्। उपनिषद्ले ब्रह्म र आत्माको निरूपण गर्दछ, तिनको एकात्मताको प्रतिष्ठापन गर्दछ; जीव र जगत्को सम्बन्धलाई निर्धारित गर्दछ।

ईशावासय उपनिषद्को सन्देश स्पष्ट छ। मनुष्यलाई इश्वरले दिएको वरदान स्वरूप जीवनले दैवी पूर्णता प्राप्त गर्न सक्दछ तर उसले यो दैवी जीवनको उपभोग गर्न तृष्णाको परित्याग गर्नु पर्दछ। अनि मात्र मनुष्यले दुःख र मोहको स्थितिभन्दा स्वतन्त्र ब्रह्म र आत्मासित तादात्म्य स्थापित गर्न सक्दछ; क्लेशको आवरणले ढाकिएको आत्मालाई उद्घाटित गर्न सक्दछ।

सम्पूर्ण ब्रह्माण्डमा तथा ब्रह्माण्डको प्रत्येक अंशमा व्यापक भई निवास गर्ने उही ब्रह्म हो। तर जब मनुष्य अविद्याले घेरिएको हुन्छ ऊ भित्र अहङ्कार व्याप्त हुन्छ। अनि उसले ब्रह्मको व्यापकता बुझ्न सक्दैन। अविद्या हटाउन र ब्रह्मको व्यापकता बुझ्न उपनिषद् नै सही साधन हो।

हो, ब्रह्मको व्यापकताको चरम विन्दु त कसैले बुझ्न सक्दैन - यो अपरम्पार छ । त्यसैले केनोपनिषद्‌मा भनिएको छ जसले बुझेको छु भन्दछ त्यसले बुझेको हुंदैन र जसले बुझेको छैन भन्दछ त्यसले बुझेको हुन्छ ।

श्री खेमराज केशवशरणज्यूको ईशावास्य उपनिषद्‌को व्याख्या पढ्दा एउटा कुरा स्पष्ट भएर आउँछ, त्यो हो ईश्वर मात्र एक अनन्त वास्तविकता हो, ऊ सम्पूर्ण सृष्टिको कारक हो, समय र स्थिति प्रति निरपेक्ष हो ।

दार्शनिक र आध्यात्मिक चिन्तनले परिपूर्ण ईशावास्य उपनिषद्‌लाई सफल व्याख्याद्वारा, कथा र उपमाद्वारा सर्वसाधारणलाई बुझाउनु एक अत्यन्त कठिन काम हो । तर प्रस्तुत व्याख्यामा उपनिषद्‌को अत्यन्त सरल तर अत्यन्त सफल व्याख्या गरिदिनुभएर विद्वान् आचार्य श्री खेमराज केशवशरणले नेपाली जनतालाई एक अविस्मरणीय उपहार प्रदान गर्नुभएको छ । श्री केशवशरणको धर्मका प्रति समर्पित जीवन नै उहाँका धार्मिक एवं आध्यात्मिक पुस्तकहरूको स्रोत हो ।

उपनिषद् जस्तो गहन विषयलाई प्राञ्जल भाषामा यति मीठो गरी सुगम तरिकाले प्रतिपादन गरिएको यस्तो पुस्तक नेपालीमा थिएन । आफ्नो मौलिक शैलीमा ईशावास्य उपनिषद्‌को यो सुन्दर व्याख्या लेखेर आचार्य श्री केशवशरणज्यूले नेपाली साहित्य उद्यानमा अर्को एउटा रमणीय पुष्प थप्नुभएको छ । विद्वान् लेखकलाई साधुवाद ।

रामशाह पथ, काठमाडौं,
२०४५ साल मकरसङ्क्रान्ति

**देवेन्द्रराज उपाध्याय**

# शुभ-कामना

नेपालका धार्मिक, साहित्यिक र शैक्षिक क्षेत्रका सुपरिचित विद्वान् प्रध्यापक श्री खेमराज केशवशरणज्यूको 'ईशावास्य उपनिषद् : जीवनदर्शनका रूपमा' शीर्षक कृति पाठकसमक्ष प्रस्तुत छ । यसमा ईशावास्योपनिषद्का मन्त्रहरूलाई सरल अर्थ र तात्पर्यका साथ प्रस्तुत गरिएको छ । अर्थ र तात्पर्यको प्रस्तुतीकरणमा नै विद्वान् लेखकको मौलिकता देखिन्छ ।

प्राध्यापक केशवशरणका धार्मिक प्रवचनहरू जति प्रभावकारी हुन्छन् शास्त्रीय विवेचन र व्याख्या पनि उति नै महत्त्वपूर्ण हुन्छन् भन्ने कुरा उहाँका प्रकाशित कृतिहरूले स्पष्ट पारिसकेका छन् । आफ्नो सरल भाषा र आकर्षक शैलीका माध्यमबाट उहाँको यस कृतिमा पनि उपनिषद्जस्तो गहन विषयवस्तुलाई सामान्य पाठकका लागि समेत बोधगम्य बनाउने स्तुत्य प्रयास भएको छ । नेपाली पाठकहरूबाट उहाँका अधिका कृतिहरूको जस्तै यसको पनि समुचित रूपमा स्वागत हुनेछ भन्ने कुरामा म पूर्णतः विश्वस्त छु ।

उपनिषद्हरू हाम्रा जीवनदर्शनका स्रोत हुन् । यी उपनिषद्हरूमा जीवनलाई सुखमय बनाउने मार्गहरूको निर्देशन हुन्छ । उपनिषद्का वाक्यहरू पारमार्थिक र व्यावहारिक दुवै स्तरमा हाम्रा लागि पथप्रदर्शक हुन्छन् र हाम्रा ऋषिमुनिहरूले देखाएको मार्गमा हिँडेर हामी निश्चित रूपमा हाम्रो लक्ष्य प्राप्त गर्न सक्छौं । प्राध्यापक केशवशरणज्यूले हाम्रा जीवनका लागि ज्यादै उपयोगी

कुराहरू सरल र बोधगम्य भाषा-शैलीमा प्रस्तुत गरेर नेपाली समाजलाई उपकृत गर्नुभएको छ ।

अन्त्यमा यस महत्त्वपूर्ण कृतिको प्रकाशनका अवसरमा म प्राध्यापक खेमराज केशवशरणज्यूलाई बधाई ज्ञापन गर्दछु र यस्तै सृकृतिहरूले नेपाली समाजलाई अलङ्कृत गर्न उहाँलाई ईश्वरबाट प्रेरणा मिलोस् भन्ने कामना गर्दछु ।

मार्ग ११, २०४५

**चूडामणि बन्धु**

# प्रकाशकीय

हिन्दू धर्म सेवा समन्वय समितिका सभापति तथा सनातनधर्म सेवा समितिका केन्द्रीय अध्यक्ष आचार्य श्री खेमराज केशवशरणज्यूबाट धार्मिक आस्थाको विकासका लागि भएको व्यक्तिगत तथा संस्थागत प्रयत्नका बारेमा कसैलाई भनिरहन पर्दैन । सनातन हिन्दू धर्मको समुत्थानप्रति नै समर्पित रहनुभएका श्री केशवशरणज्यूले प्रवचन र लेखन दुवै माध्यमबाट राष्ट्रिय जीवनमा प्रशंसनीय धार्मिक योगदान पुऱ्याउनुभएको छ । उहाँका प्रवचन र लेखन दुवै उत्तिकै आकर्षक र प्रेरणादयी सिद्ध भएका छन् । गत दुई दशकदेखि रेडियो नेपालबाट प्रसारित हुने लक्ष्यचिन्तनबाट धार्मिक क्षेत्रका श्रोताहरूलाई नित्य नूतन भावसामग्रीहरू प्राप्त हुने गरेको सबैले अनुभव गरेका छन् । प्रस्तुत पुस्तक 'ईशावास्य उपनिषद्: जीवनदर्शनका रूपमा' उहाँको मौलिक शैलीमा अभिव्यक्त ईशावास्य उपनिषद्को अनुवाद हो । वेदान्तदर्शनको मूलस्रोत मानिएको उपनिषद् दर्शनलाई पनि लालित्यपूर्ण र सरल रूपमा प्रस्तुत गर्न सक्नु श्री केशवशरणज्यूको मौलिक चिन्तनकै विशेषता हो भनेमा अत्युक्ति होला जस्तो लाग्दैन । हिन्दू धर्म र संस्कृतिका मूलभूत तत्त्वहरूको प्रतिपादन र चिन्तनमननको अत्यधिक आवश्यकता अनुभव भइरहेको समयमा यस्तो अमूल्य कृतिको प्रकाशन गर्न पाएकामा मलाई अत्यन्त सन्तोष लागेको छ ।

आशा छ प्रस्तुत पुस्तकले पाठकवर्गको आध्यात्मिक जिज्ञासाको समाधानमा केही सहयोग अवश्य पुऱ्याउने छ र धार्मिक साहित्यको क्षेत्रमा महत्त्वपूर्ण उपलब्धि सिद्ध हुने छ ।

कृष्णगोपाल टण्डन

बत्तीसपुतली, काठमाडौं
मार्ग ११, २०४५

# मेरो निवेदन

उपनिषद् हाम्रो जीवनदर्शनको मूल स्रोत हो । उपनिषद्लाई ब्रह्माविद्या अथवा वेदान्त पनि भन्दछन् । उपनिषद्मा जीवन, जगत् र जगदीश्वरको परिचयका साथै साधनाका अनेकौं मार्मिक पक्षहरूमा राम्ररी प्रकाश पारिएको छ । प्रत्येक हिन्दूले आफ्नो मूल दर्शनस्रोतको परिचय प्राप्त गर्नु वाञ्छनीय छ । अझ विशेष गरी हामी उत्तराञ्चलका वेदाध्यायीहरूको त सोझै सम्बन्ध छ ईशावास्य उपनिषद्सँग । किनभने यो शुक्ल यजुर्वेद संहिताको अन्तिम अध्याय हो । महर्षि याज्ञवल्क्यले भगवान् भुवनभास्कर सूर्यबाट प्राप्त गरेको ज्योतिर्मय मन्त्रराशि नै शुक्ल यजुर्वेद संहिता हो । हामी सबै प्रतिदिनको सङ्कल्पवाक्यमा 'शुक्लयजुर्वेदान्तर्गतमाध्यन्दिनवाजस-नेयशाखाध्यायी' भनी आफ्नो परिचय दिने गर्दछौं । वाजसनेय माध्यन्दिन शाखाका अध्येताको नाताले हामी उत्तराञ्चलका वेदाध्यायीहरूलाई अरू धेरै नभए पनि ईशावास्य उपनिषद्को त सामान्य जानकारी हुनै पर्दछ ।

२०४४ सालमा रेडियो नेपालको लक्ष्यचिन्तनअन्तर्गत ईशावास्य उपनिषद्का सम्बन्धमा धारावाहिक प्रवचन प्रस्तुत गर्ने सुअवसर मिलेको थियो । त्यस वेला गरिएका तिनै प्रवचनहरूलाई केही परिष्कारका साथ प्रस्तुत पुस्तकमा समावेश गरिएको छ ।

गुणग्राहिता लिनुभई प्रस्तुत पुस्तक प्रकाशित गर्ने सौजन्य दर्साएकामा उदारमना श्री कृष्ण गोपाल टण्डनज्यूप्रति आभार ज्ञापन गर्दछु । प्रस्तुत पुस्तकलाई विद्वत्तापूर्ण भूमिका लेखिदिनुभई असाधारण सहयोग गर्नुभएकामा सहृदय विद्वान् मित्र श्री देवेन्द्रराज

उपाध्यायज्यूप्रति चिरकृतज्ञ छु । त्यसै गरी आफ्नो हृदयस्पर्शी शुभ-कामना प्रदान गरेर प्रस्तुत पुस्तकको गौरव बढाइदिनुभएकामा विद्वदवर प्राज्ञ डा. चूडामणि बन्धुज्यूमा कृतज्ञता ज्ञापन गर्दछु । आवरणपृष्ठका लागि निःशुल्क चित्र निर्माण गरिदिनुभएकामा मित्र कलाकार श्री हरिप्रसाद शर्माज्यूलाई धन्यवाद दिन्छु । प्रस्तुत पुस्तकद्वारा आध्यात्मिक रुचि राख्ने साधनाप्रेमी पाठकहरूका जिज्ञासहरूका लागि ज्ञान प्राप्तिमा सहायक हुन सकेमा आफ्नो परिश्रम सफल सम्झने छु । शेप, प्रभुकृपा ।

**– खेमराज केशवशरण**

# वेद र उपनिषद्

ऋग्वेद, यजुर्वेद, सामवेद र अथर्ववेद यी चारै वेदसँग सम्बन्धित विशिष्ट उपनिषद्हरू छन् जसलाई वैदिक वाङ्मयको नवनीत भनेर स्वीकार गरिएको छ । वेदका तीन मुख्य विभाग छन्- संहिता, ब्राह्मण र आरण्यक । वेदका मूल मन्त्रहरूको सङ्कलन भएको अंश संहिता भाग कहलाउँछ । संहिता भागमा आएका मन्त्रहरूका प्रतिपाद्य विषयका व्याख्याका साथ विधिविधानहरूको प्रतिपादन गर्ने अंशलाई ब्राह्मण भाग भनिन्छ । अनि जीवनको आध्यात्मिक व्याख्या दिने र ब्रह्म, ईश्वर, प्रकृति, आत्मा, संसार आदिको तात्त्विक विवेचना गर्दै मानिसलाई आत्मचिन्तनतर्फ अभिमुख गराउने विषय भएको अंश चाहिं आरण्यक कहलाउँछ । उपनिषद्हरू यही आरण्यक भागमा पर्दछन् । एकान्त, शान्त, सुन्दर वन्यप्रदेशहरूमा गरिने जीवनसाधनासम्बन्धी आध्यात्मिक विषयवस्तु भएको अंश हुनाले यस अंशलाई अरण्य शब्दबाट बनेको आरण्यक नामले बताइएको छ । उपनिषद्हरू आरण्यक साहित्यका सारभूत अंशका रूपमा परिचित छन् ।

उपनिषद् शब्दको मुख्य अर्थ यसका नाममा रहेका तीन पदांश 'उप', 'नि' र 'सद्' ले इङ्गित गरेका छन् । उप भनेको नगिच, नि भनेको दृढता एवं तत्परतासाथ र सद् भनेको बस्नु । यसरी गुरुका समीपमा विनम्रतासाथ बसेर ग्रहण गरिएको जीवनोपयोगी विद्या भन्ने अर्थ यसबाट आउँछ । वेदको अन्तिम भागमा पर्ने र अत्यन्त महत्त्वपूर्ण सारभूत शिक्षा प्रदान गर्ने हुनाले उपनिषद्लाई वेदान्त पनि भनिन्छ । यसैको अर्को नाम 'ब्रह्मविद्या'

पनि रहेको छ । कुनै पनि शास्त्रीय विषय जब त्यो सर्वमान्य र प्रामाणिक रूपमा प्रतिष्ठित बन्दछ त्यसलाई पनि उपनिषद् भन्ने चलन छ । सम्पूर्ण हिन्दु धर्मसंस्कृतिको जीवनदर्शनसम्बन्धी मूलस्रोतका रूपमा उपनिषद् दर्शन प्रतिष्ठित छ । हिन्दुतत्त्वज्ञान एव धर्मविवेचनाको आधारभूत स्रोतका रूपमा उपनिषद्सम्बन्धी वाङ्मयलाई नै मान्यता प्रदान गरिएको छ । जीवनदर्शनको व्याख्याताको दृष्टिले उपनिषद् वाङ्मयको कति महत्त्व छ भन्ने कुरा उपनिषद्हरूलाई प्रमाणका रूपमा मानेर विषयविवेचना गर्ने वैदिक दर्शनहरूका साथै बौद्ध तथा जैन दर्शनहरूमा समेत यिनीहरूबाट लिइएका विभिन्न उदाहरणले जनाउँछन् । 'प्रस्थानत्रयी' भनेर सम्मानित गरिएको तीन थरी प्रस्थान वाङ्मयमा उपनिषद्कै नाम पहिले आउँछ । त्यसपछि ब्रह्मसूत्र र भगवद्गीताको नाम लिइन्छ । हिन्दू धर्मसंस्कृतिको विकासको क्रममा उदाएका सम्पूर्ण आस्तिक सम्प्रदायहरू र मतहरूले आ-आफ्नो सैद्धान्तिक पुष्टिका निम्ति यिनै तीनलाई प्रमाण मानेर आफ्नो तात्त्विक भाष्य, टीका र विवेचना प्रस्तुत गरेका छन् । शंकराचार्य, रामानुजाचार्य, निम्बार्काचार्य, बल्लभाचार्य, माध्वाचार्य आदि वेदान्तदर्शनका व्याख्याता आचार्यहरूले आ-आफ्नो दार्शनिक तत्त्वनिरूपणका निमित्त उपनिषद्लाई नै पहिलो प्रामाणिक आधार बनाएका छन् ।

उपनिषद्दर्शनको सार्वभौम जीवन व्याख्याबाट प्रभावित भएर अनेकौं पाश्चात्य विद्वान्हरूले समेत उपनिषद्को अध्ययन गरेको देखिन्छ । उपनिषद्को यसरी अध्ययन गर्ने पाश्चात्य मनीषीहरूमा जर्मन दार्शनिक शोपेन हावर एवं महाकवि गेटे विशेष' प्रसिद्ध छन् । अङ्ग्रेजी, जर्मन, फ्रेन्च, फारसी आदि अनेकौं भाषामा

उपनिषद्को अनुवाद भएको छ । जीवन, जगत् र जगदीश्वरको तात्त्विक विवेचनासँग सम्बन्धित उपनिषद् वाङ्मयमध्ये आकारले सानो रहेर पनि जीवनदर्शनको अत्यन्त मार्मिक रूपमा प्रतिपादन भएको र भगवद्गीताको सम्पूर्ण विवेचनीय विषयको मूल स्रोतका रूपमा देखापर्ने उपनिषद् हो 'ईशावास्य उपनिषद् ।'

यजुर्वेदका दुइटा रूप छन् । शुक्लयजुर्वेद र कृष्णयजुर्वेद । कृष्णयजुर्वेदको प्रचलन विशेष गरी दक्षिण भारतमा प्रसिद्ध छ । हार्मा५.हाँ शुक्लयजुर्वेदको परम्परा प्रचलित रहिआएको छ । यजुर्वेदलाई ब्रह्मसम्प्रदाय र आदित्यसम्प्रदाय गरी दुई रूपमा मानिएको छ । त्यसमध्ये आदित्यबाट अर्थात् सूर्यबाट महर्षि याज्ञवल्क्यले प्राप्त गरेका मङ्गलमय मन्त्रहरूको सङ्कलनका रूपमा रहेको नाताले शुक्लयजुर्वेदलाई आदित्यसम्प्रदायअन्तर्गत मानिएको छ । शुक्लयजुर्वेदको संहिता 'वाजसनेयी संहिता' को नामले परिचित छ । जसमा चालीस अध्याय छन् । ती चालीस अध्यायमध्ये अन्तिम अध्यायलाई 'ईशावास्य उपनिषद्' का रूपमा मानिएको छ । मूल संहितामध्येकै एक अध्याय सिङ्गै उपनिषद्का रूपमा रहेको ईशावास्य उपनिषद् सबै उपनिषद्हरूभन्दा प्राचीन मानिन्छ । किनभने अन्य उपनिषद्हरू प्रायः आरण्यकअन्तर्गत पर्दछन् । यसै कारणले उपनिषद्हरूको गणना गर्ने क्रममा ईशावास्य उपनिषद्को नाम पहिले आउने गरेको पाइन्छ । हामी सम्पूर्ण वैदिक धर्मालम्बी नेपालीहरू शुक्लयजुर्वेदको वाजसनेयी संहिताका माध्यन्दिनीशाखाका अनुयायी हौं । आफ्नो परम्परागत वैदिक शाखा एवं संहिता अन्तर्गत पर्ने उपनिषद् भएको हुनाले ईशावास्य उपनिषद्द्वारा प्रतिपादित जीवनदर्शनबाट परिचित रहनु हाम्रो परम पवित्र कर्तव्य हो । आफ्नो शास्त्रीय स्रोतको ज्ञानलाई

बढाउँदै जान सकेमा हामी स्वधर्मको संरक्षणमा बढी सक्षम हुनेछौं । हाम्रो सम्पूर्ण व्यवहारजगत् र हाम्रो पारमार्थिक कर्तव्यलाई समेत प्राञ्जल रूपमा अत्यन्त स्पष्टता साथ प्रतिपादन गर्ने ईशावास्य उपनिषद्सम्बन्धी चिन्तनले हाम्रो मनमस्तिष्क, हाम्रो कर्मव्यवहार सबैलाई पावनता प्रदान गर्न सक्ने शुद्ध साधनामय आलोक प्राप्त हुने विश्वास लिनु यहाँ अप्रासङ्गिक हुँदैन ।

ईशावास्य उपनिषद्को सारपूर्ण शिक्षाले जगत् र जगदीश्वर परस्पर टाढा छैनन्, सम्पूर्ण जगत्भित्रैबाट हामी जगदीश्वरको सत्ताको अनुभूति गर्न सक्छौं भन्ने व्यापक र कल्याणकारी जीवनसन्देश प्रदान गर्दछ ।

उपनिषद् हाम्रो जीवनदर्शनको मूल स्रोत हो । हिन्दू धर्म-संस्कृतिको विश्वकल्याणकारी माङ्गलिक स्वरूप जुन मूलभूत सत्य सन्देशहरूले निर्माण भएको छ, जुन शान्तिगामी आध्यात्मिक शिक्षाहरूप्रति विश्वभरिका साधकहरू स्वतः प्रेरित भएर हिन्दू धर्मसंस्कृतिले दिएको जीवननिर्माणको मार्ग ग्रहण गर्न लालायित बन्ने गरेको पाइन्छ, त्यसको मूल स्रोत उपनिषद् दर्शन नै हो । हामीले अब यसले प्रतिपादन गरेका व्यावहारिक र पारमार्थिक दुवै धरातलमा अवस्थित आध्यात्मिक शिक्षाहरूलाई सम्झनु छ ।

## मङ्गलाचरण

सर्वप्रथम मङ्गलाचरणतर्फ ध्यान दिऔं । प्रत्येक उपनिषद्मा आ-आफ्नो विशिष्ट प्रकारको मङ्गलाचरण हुन्छ । ईशावास्य उपनिषद्को मङ्गलाचरण मन्त्रले आफ्नै विशेषता राखेको छ । यो अध्यात्मजगत्कै मूल मन्त्रसरह छ । त्यो मन्त्र हो-

पूर्णमदः पूर्णमिदम् पूर्णात्-पूर्णमुदच्यते ॥
पूर्णस्य पूर्णमादाय पूर्णमेवावशिष्यते ॥
ॐ शान्ति शान्तिः शान्तिः ।

यस पावन मन्त्रले भन्दछ- यस सम्पूर्ण जगत्को मूल त्यो परमात्मसत्ता पूर्ण छ, पूर्ण परमात्माबाट सृष्टि भएको यो सम्पूर्ण दृश्यजगत् पूर्ण छ । पूर्णबाट पूर्ण उद्भूत हुन्छ । पूर्णरूप यस सिर्जनाभित्रबाट जे लिइन्छ त्यो स्वयं पनि पूर्ण छ र पूर्णबाट पूर्णलाई लिँदा बाँकी पनि पूर्ण नै रहन्छ । सबैको अन्तिम लक्ष्य शान्ति हो, ॐ रूप, प्रणवरूप महामन्त्रले लक्ष्य गरेको जीवमात्रको परम ध्येय शान्ति हो ।

जीवन के हो ? उपनिषद्को भाव र भाषामा भन्दा जीवन अप्रकट पूर्णबाट व्यक्त भएको स्वयं एउटा पूर्ण हो । एउटै चेतनसत्तास्वरूप परमात्माबाट यो सम्पूर्ण सृष्टिचक्र उद्भूत र विकसित भएको छ । जगत्को व्यवहारमा दुई प्रकारका कारणहरू देखा पर्दछन् ; एउटा निमित्त कारण हो भने अर्को उपादान कारण । पदार्थ जुन कर्ताद्वारा वा निर्माताद्वारा निर्मित हुन्छ त्यो कर्ता वा निर्माता निमित्त कारण हो । जस्तो घडा बनाउने कुम्हाले घडाका लागि निमित्त कारण हो । त्यसै गरी वस्तु वा पदार्थ बनाउनमा सहयोगी हुने उपकरण पनि निमित्त कारण हो । जस्तो कपडा बुन्नमा काम आउने चर्खा, तान आदि । तर जुन वस्तुबाट कुनै पदार्थ बनेको हुन्छ, त्यस्तो घटक वस्तुलाई चाहिं 'उपादान' कारण भनिन्छ । जस्तो घडाका लागि माटो, कपडाका लागि कपास । बनाउने कर्ता एवं बनाउन काम लाग्ने उपकरण निमित्त कारण हुन्छ र जेबाट वस्तु बन्दछ त्यो चाहिं उपादान कारण कहलाउँछ । संसारका निर्माताको नाताले निमित्त कारण पनि

परमात्मा नै हुन् र परमात्माकै चिद्विलासका रूपमा रहेका शक्तिरूपा प्रकृतिबाटै बनेका सम्पूर्ण उपकरणहरू र सृष्टिका घटक भौतिक तत्त्वहरूसमेत परमात्मा रूप नै भएका हुनाले उपादान कारण पनि परमात्मा नै हुन् । यसरी यस सृष्टिचक्रभित्र जे छ जति छ सबै परमात्मारूप छ । त्यसैले कारणरूप परमात्मा पूर्ण छन् । कारणरूप परमात्माबाट प्रकट भएको कार्यरूप जगत् पूर्णरूप छ । अनि यसबाट जे जान्छ त्यो पनि पूर्ण नै हुन्छ, जे रहन्छ त्यो पनि पूर्ण नै हुन्छ ।

परमात्मा पूर्ण छन् । पूर्ण परमात्माकै व्यक्त रूप जगत् पनि पूर्ण छ । पूर्णबाट पैदा भएर, पूर्ण रूपमा रहेर अन्त्यमा पनि पूर्णतामै पुग्नु नै सम्पूर्ण प्रवृत्तिको मूल ध्येय हो । प्रत्येक आत्मा परमात्माको अंश हो । तर अंश भैकन पनि आत्मा पूर्ण हुन्छ । भौतिक जगतको कुनै स्थूल अंशको जस्तो आत्माको स्थिति हुँदैन । आत्मा र परमात्माको स्थिति ज्योतिको जस्तो हुन्छ । एउटा सुन्दर दीप कहीं प्रकाशमान छ । त्यो स्वयंमा पूर्ण छ । त्यसबाट अन्य हजारौं दीपहरूले पहिलो मूल दीपबाटै ज्योति लिएका हुन्छन्, प्रकाश पाएका हुन्छन् । परन्तु हजारौं, लाखौं दीपहरूलाई सल्काएर प्रकाश प्रदान गरेर पनि मूल दीप आफ्नो उही पूर्ण आभा लिएर झलमलाइरहेको हुन्छ । त्यसै गरी सम्पूर्ण कारणहरूका पनि कारण बनेर पनि परमात्मा सदा एकरस छन्, अखण्ड छन्, तिनै अखण्ड, एकरस, पूर्णतम परब्रह्म परमात्मालाई प्राप्त गर्नु, अनुभव गर्नु जीवनको परम लक्ष्य हो ।

यस पावन मन्त्रले मनुष्य जीवनको मूल ध्येयलाई लक्ष्य गरेको छ । पूर्णताको अनुभव सृष्टिभित्र अरू प्राणीले गर्न सक्दैनन् । मनुष्यभिन्न प्राणीलाई चेतनाको विकासद्वारा पूर्ण बन्ने

सौभाग्य प्राप्त हुँदैन । तर मनुष्य चेतनाको पूर्णतम विकासभूमिमा आइपुगेको सृष्टिको भूषण हो । सामान्य स्थितिमा जन्मेर पनि साधनाद्वारा समुन्नत बन्दै समाजका प्रकाश बन्ने शक्ति मनुष्यमा नै छ । मनुष्य जीवन पूर्णताको यात्रा हो । बाटो नबिराई पूर्णताबाट आएको यात्री अन्त्यमा पनि पूर्णतामै पुग्दछ ।

पूर्णताको सर्वोपरि केन्द्र भगवान् हुनुहुन्छ । उहाँसित सम्बन्धित भएर, उहाँको पूर्णसत्ताको अनुभूति गरेर जिउनुमा नै साँचो जीवन हुन्छ । शरीरको कुनै पनि अङ्ग शरीरसँग सम्बन्ध । विच्छिन्न हुनासाथ जीवात्माको पूर्णतासित सम्बन्ध टुट्दछ । किनभने परमात्माको पूर्णताको अनुभूतिले मात्र जगत्सितको सम्बन्ध पूर्ण हुन्छ । परमात्माको अनुभूतिविना जगत् पूर्ण नभएर अपूर्ण, क्षणभङ्गुर र नित्यपरिवर्तनशील छ । जसको अनुभूतिमा परमात्मा नआएर केवल संसार आउँछ त्यसको यही अपूर्ण संसारसँग मात्र सम्बन्ध हुन्छ । जसको अनुभूतिमा परमात्मा आउँछन्, तिनैको जीवनयात्रा पूर्णताको यात्रा हुन्छ । भगवान्मा, परमात्मामा ब्रह्ममा जसको अनुभूति केन्द्रित हुन्छ त्यसका लागि सृष्टिको काखमा परमात्माले गरेका व्यवस्थाहरू सबै पूर्ण छन् । पूर्ण परमात्मासँग सम्बन्ध रहेमा सृष्टिका कणकण पूर्ण छन्, क्षण-क्षण पूर्ण छन् । तर परमात्माको सम्बन्ध-विच्छेद हुनासाथ जीवन नै अपूर्णतासँग गाँसिएको हुन्छ । 'पूर्णमद : पूर्णमिदम्' को यो पारमार्थिक अनुभूति आध्यात्मिक साधनाको सर्वोच्च शिखरबाट भएको छ । जो शान्तिको यात्रामा हुन्छन्, मुक्तिको यात्रामा हुन्छन्, तिनलाई उपलब्धिका रूपमा यस्तै सर्वगामी पूर्णता अनुभूत हुन्छ ।

# पहिलो मन्त्र

ईशावास्य उपनिषद्को पहिलो मन्त्र अब हाम्रो सामु छ । प्रथम मन्त्रमा तीन सिद्धान्तहरू छन् जो जीवनका निम्ति अत्यन्त महत्त्वपूर्ण छन् । यिनको अर्थ सम्झेर तदनुकूल जीवन बनाउने साधकहरू जीवनमा अत्यन्त सफल हुन्छन् । पूर्ण जीवनको लाभ तिनलाई प्राप्त हुन्छ । हामी पहिले मन्त्रलाई पूरा पढौं अनि क्रमशः ती तीन सिद्धान्तहरूबारे विचार गरौं । मन्त्रको पूर्वार्धमा पहिलो सिद्धान्त बताइएको छ । उत्तरार्धका दुई सिद्धान्तबाट दुइटा आदर्शशिक्षा प्राप्त हुन्छन् । मन्त्र यस प्रकार छ–

**ॐ ईशावास्यमिदं सर्वं यत्किञ्च जगत्यां जगत्**
**तेद वक्तेन भुञ्जीन्थ्य मागृधः कस्यस्विद्धनम् ॥१॥**

## सरल अर्थ

यस परिवर्तनशील विश्वमा जेजति स्थावर जङ्गम जगत् प्रपञ्च छ त्यो सबैमा ईश्वर व्याप्त छन् । त्यसैले ईश्वरको सेवाका रूपमा आफूसँग भएका सम्पूर्ण साधनको त्याग गरेर उपभोग गर्नुपर्दछ । मानव ! तिमीले अर्काको धनमा लुब्ध कहिल्यै बन्नु हुँदैन ।

## तात्पर्य

एक-एक चरण गरेर सोचौं 'ईशावास्यमिदं स्यमिदं सर्वं यत् किं ञ्चजगत्यां जगत् ।' सम्पूर्ण विश्वमा जे जति छ सबैमा ईश्वर व्याप्त छन् । जीवनमा सफलता चाहनेले यो कुरा पढ्ने मात्र होइन, सुन्ने मात्र होइन, अरूलाई बताउने मात्र पनि होइन, स्वयंले

अनुभव गर्नुपर्दछ । आँखा खुलेको मानिसका लागि यो सम्पूर्ण सृष्टिविस्तार ईश्वरको अस्तित्वलाई दर्साउने एउटा स्वच्छ दर्पण हो । सृष्टिको जुन अङ्गमा दृष्टि दिए पनि ईश्वरको हस्तकौशल व्यक्त नभएको ठाउँ नै देखिँदैन । ईश्वर छन्, उनको व्यवस्था छ, त्यसैले प्राणीमात्रलाई खुला आकाश प्राप्त छ, चन्द्र र सूर्यको प्रकाश प्राप्त छ, समयमा बादल जुट्दछन्, वृष्टि हुन्छ, धर्तीले अन्नादि उब्जाउँछिन् । यी सबै ती परमपिता, परमस्वामी, परमबन्धु परमेश्वरका अस्तित्वका प्रत्यक्ष साधक प्रमाण हुन् । हामीले जीवनको सफल, सुन्दर, कल्याणकारी पूर्ण स्वरूप निर्माण गर्ने क्रममा सबैभन्दा पहिले आफैंप्रति सोध्नुपर्दछ के हामीलाई ईश्वरको अस्तित्वको अनुभूति कहिल्यै भयो ? यदि भएन भने हामीले जिउन विशेष गरी मानवजीवन जिउन नै सिकेनौं । यसलाई सुन्दर जीवन बनाउन जानेनौं । यदि ईश्वरको अनुभूति भयो भने हामी अत्यन्त भाग्यशाली हौं । किनकि समष्टिचेतनास्वरूप विश्वात्मा प्रभुजी श्रीहरिको अनुभूति गरेर मात्र मानिसले जीवनविकासको मूल फेला पार्न सक्तछ । साधनाशास्त्रहरू भन्दछन्- जसको सम्बन्ध केवल संसारसितको आसक्तिमै रित्तिन्छ, भगवान् वासुदेवसंगको नित्य सम्बन्ध अनुभवै गर्न सक्दैन, त्यो त पशुमानव हो । जो मानिस बन्धु-बान्धव, स्त्री, छोराछोरी, बाबुआमा, नोकरचाकर यी जगत्का नातामा त जेलिएको छ तर क्षण-क्षण कृपादृष्टि छरेर जीवनयात्राको प्रत्येक मोडमा सहयोगी बनिदिने परमकृपालु परमपिता वासुदेवसितको अविच्छेद्य सम्बन्धको मिठासलाई बुझ्नै सक्तैन त्यो पूर्ण मानव होइन । पशुत्व टाँस्सिएको मानव आकृतिमात्र हो ।

**परमसुहृदि बान्धवे कलत्रेसुततनयापितृभृत्यवर्गे**
**शठमतिरुपयाति योऽर्थतृष्णां पुरुषपशुर्नतु वासुदेवभक्त : ॥**

यस्तो परमात्मविमुख चिन्तन र व्यवहारले जीवन कुण्ठित हुन्छ, स्वार्थले अन्धो बनाइदिन्छ । अरू चाहिं जति नै कष्टमा रहुन् परवाह रहन्न, सेवा, उपकार विलकुलै असम्भव हुन्छ । जीवन विकास सङ्कटमा पर्दछ । फक्रिएर चारैतिर सौरभ छर्न सक्ने जीवनकली कोपिलो अवस्थामा नै नष्ट भएर जान्छ । यी सब अनर्थहरू जीवनमा ईश्वरको अनुभूति नहुँदाका दृष्परिणाम हुन् । परमात्माप्रतिको आस्थाबाट मानिस यस्तो हुँदैन । जब मानिस अनुभव गर्दछ - एउटै परमपिताको अविरल स्नेहद्वारा सृष्टिको अङ्ग-अङ्गमा प्राणीमात्रमा प्रतिक्षण, प्रतिपल प्रवाहित छ, अनि मानिस परोपकारी हुन्छ । सेवालाई जीवनको सौभाग्य सम्झिन थाल्दछ । किनभने प्राणीमात्रको सेवा उनै परमपिताको सेवा हो भन्ने पवित्र भाव मनमा जाग्दछ । यसरी आत्मविकासको एउटा उज्यालो मनभित्र पस्दछ । मानिस सीमित स्वार्थको घेराभित्र थुनिएर नष्ट भइरहेको आफ्नो अस्तित्वलाई अत्यन्त समुज्ज्वल रूपमा प्रस्तुत गर्न, विशाल बनाउन सफल हुन्छ । प्रभु श्रीहरि सर्वत्र हुनुहुन्छ भन्ने भाव मनमा जागृत हुनासाथ संसारका सबै कुरा सर्वत्र प्रभुका हुन् मेरा होइनन् भन्ने समझदारी उदाउँछ । मैले त सौभाग्यवश प्रयोक्ता बन्ने सुअवसर पाएको छु । श्रम, बुद्धि, विद्या, धन, वैभव जेजति मसँग छ मैले प्रभुको सेवामा लगाएर सार्थक तुल्याउनु छ भन्ने सुन्दर कल्याणकारी भावना मानिसमा जाग्दछ । पछि परेकालाई सहयोग गर्नु, अप्ठेरोमा परेकालाई सहारा दिनु ऊ सौभाग्य ठान्दछ । यस प्रकार ऊ पूर्ण मानव बन्दछ । विश्वमा बाँचेको पूर्ण आनन्द त्यस्तैलाई प्राप्त हुन्छ ।

क्षणक्षण पलपल ईश्वरकै काखमा बसेर पनि उनैको अस्तित्व नस्वीकार्ने मानिसले आफैं आफूलाई सजायको भागी तुल्याइरहेको हुन्छ । स्वार्थ, द्वेष, घृणा, भेददृष्टि, परपीडन जस्ता

दुर्व्यवहारमा मानिस ईश्वरानुभूतिबाट वञ्चित भएर नै फस्न पुग्दछ । यी दुर्गुणहरू नै उसका लागि सबैभन्दा ठूला सजाय हुन् । किनभने ऊ अत्यन्त विकसित, अत्यन्त कल्याणकारी जीवन जिउन सक्ने हुँदाहुँदै पनि यिनैले गर्दा त्यस सौभाग्यबाट ठगिएर कुण्ठित, दृष्टिहीन, सङ्कीर्ण बनेर आफूलाई खसाल्न पुग्दछ । त्यसैले ईश्वरानुभूति अन्तिम महत्त्वपूर्ण आधारभूत सद्गुण हो जसले मानिसको सौभाग्यको द्वार खोलिदिन्छ ।

एक जना नकारात्मक दृष्टि भएको मानिस एउटा बगैंचामा घुमिरहेको थियो । प्रकृतिका विधि व्यवस्थाहरूमा पनि ऊ त्रुटि देखाउँदै थियो । ईश्वरीय रचनामा पनि अव्यवस्था औंल्याउँदै थियो । घुम्दै जाँदा उसले एउटा बेलको रूख देख्यो । ग्रीष्म ऋतुको बेला थियो । त्यही नगिच फर्सी, लौकाहरू फलिरहेका थिए । जमिनमा ठूला-ठूला फर्सी फलेर तेर्सिरहेका देखेपछि ऊ कल्पना गर्न थाल्यो- 'ईश्वर ईश्वर भन्दछन्, उनले व्यवस्था गरेका छन् रे भन्छन् । मलाई त कुनै व्यवस्था गर्ने ईश्वर भए जस्तो लाग्दैन । नत्र सृजनामा यस्ता गल्ती हुन्थे ? हेर त कान्छी औंला जत्रै लहरो भएको ठाउँमा चाहिं उचाल्नै गाह्रो पर्ने हेमानका फल तेर्स्याएका छन् । जसको यत्रो विशाल फेद छ यो बेलको रूखमा चाहिं हत्केलाभरिका साना-साना फल छन् । यो कस्तो उल्टो व्यवस्था ? प्रकृतिले पनि के गरेकी हुन् ? रचना गर्ने बेलामा म पुग्न पाएको भए सल्लाह दिने थिएँ ।' यस्तै के-के सोचेर ईश्वरको अस्तित्वप्रति नै शङ्का गर्दै थियो । एक्कासि ठूलो आँधी आएर बेलको रूख हल्लिन थाल्यो । एकै छिनपछि माथिबाट एउटा पाकेको ठूलो बेल खसेर उसको पुर्पुरोमा लाग्यो । त्यसपछि त्यस नकारात्मक दृष्टिवाला व्यक्तिका आँखा खुले र उसले तुरुन्त

परमेश्वरसँग क्षमा माग्यो । परमपिता ! म ज्ञानको कणमात्रको भरमा घमन्ड गरेर तिम्रो अस्तित्वलाई नै शङ्कास्पद मानिरहेको थिएँ । त्यसको सजाय मलाई मिल्यो । मलाई थाहा भयो तिमी रहेछौ तिम्रो व्यवस्था सुन्दर रहेछ । माथि-माथि फल लाग्ने हुनाले बेलको रूखमा साना फल लगाएका रहेछौ । मैले नबुझेको रहेछु । नत्र बेलको रूखमा पनि त्यत्रै फल लगाएका थियौ भने अहिले मेरो इहलीला यहीं समाप्त हुने थियो । हे करुणामय ! परमपिता ! तिम्रो व्यवस्था कति धन्य छ ! तिम्रो अस्तित्व कति महिमामय छ । मलाई क्षमा गर ।'

मानिसले हेर्न सिक्नुपर्दछ । हेर्न जानेमा सृष्टिको कुनै फाँट छैन जहाँ परमात्माका अव्यक्त सुन्दर हातको कौशल देख्न नपाइयोस् । वेदले वर्णन गरेको विश्वतश्चक्षु, विश्वतोमुखः विश्वतोबाहु, विश्वतस्पाद् भनेर सबैतिर आँखा, मुख, हात र पाउ भएको ईश्वरको व्यापक स्वरूप र कल्याणकारी सिर्जना सर्वत्र दृष्टिमा पर्न सक्तछ । यस पावन मन्त्रले पहिलो सन्देश यही दिन्छ, प्रभुको सर्वव्यापक सत्तालाई अनुभव गर्न सिक र सम्पूर्ण सृष्टिभित्र उनैको कृपादृष्टि विद्यमान छ भन्ने सम्झ ।

मन्त्रको उत्तरार्धको पहिलो चरण भन्दछ– 'तेन त्यक्तेन भुञ्जीथाः' विश्वमा जेजति छ सबैमा ईश्वर व्याप्त छन् । उनैको शक्तिबाट विश्वजगत् नियमित रूपले सञ्चालित भइरहेको छ । त्यसैले तिमी ईश्वरका शक्तिबाट पैदा हुने र विकसित बन्ने संसारको कुनै पनि वस्तुलाई आफ्नो भनी नठान ईश्वरको भनी ठान र त्यागपूर्वक ईश्वरसेवाका निम्ति छुट्ट्याएर मात्र उपभोग गर्ने गर । यस प्रकार यस चरणको अर्थ हुन्छ– तेन = त्यस कारण, त्यक्तेन = त्यागपूर्वक, भुञ्जीथाः = उपभोग गर ।

यस मन्त्रांशले मानवमात्रका लागि मूलभूत जीवनदर्शन प्रदान गरेको छ । मानिसले ईश्वरका निम्ति आफ्नो प्रत्येक साधनबाट केही अंश छुट्ट्याउनुपर्दछ । उसका निमित्त यो मर्यादा हो, कर्तव्य हो, अनुशासन हो । आयु छ त्यो अमर निधि हो त्यसबाट पनि केही अंश अगवत्सेवाका निमित्त छुट्टिएको हुनुपर्दछ । प्रत्येक दिन मानिसले विचार गर्नुपर्दछ, मैले आज कति समय भगवत्सेवामा व्यतीत गरें । आफ्नो हितका निमित्त नै सबै समय वित्यो कि समष्टिहितको कार्यमा पनि केही समय लगाउन सकियो । विचार पुऱ्याउनुपर्दछ । त्यसै गरी आफूले कमाएको धन छ, त्यसमध्येबाट केही अंश अरूको हित हुने कार्यमा खर्च गर्न सकियो कि सकिएन ? अन्ध अपाङ्गहरू, बिरामीहरू, दैवी विपत्तिमा परेका असहायहरू, गरीबहरूको सेवामा सानोतिनो जे जस्तो सकिन्छ आफूसँग भएको साधनबाट उपयोग हुनुपर्दछ । बल, विद्या, बुद्धि सबैबाट परसेवाको केही न केही कार्य हुनुपर्दछ । 'त्यक्तेन भुञ्जीथाः' ले ईसारा गरेको जीवनदर्शन यतैतिर लक्ष्यित छ ।

परमात्माको सेवा निम्ति छुट्ट्याएर साधनको उपभोग गर्ने कुरा त आयो । तर परमात्माको सेवा भनेर केलाई सम्झिने ? प्रश्न हुन्छ । पहिले परमात्माको सेवा उनको नित्य स्मरण, पत्रंपुष्पमद्वारा यथाशक्ति उनको अर्चना आफ्नै हातले गर्नु हो । यस्तो गर्ने गर्दा परमात्मासहितको आफ्नो नित्य सम्बन्धको स्मरण नित्य सम्बन्धको स्मरण बनिरहन्छ । परमात्मासितको नित्यसम्बन्धको अनुभव भइरहेमा मानिसको मन निर्मल हुन्छ, राम्रा-राम्रा विचारहरू मनमा उठिरहन्छन् । अनि राम्रै काम गरिरहन पाइन्छ । परमात्माको पहिलो सेवा यही हो । त्यसपछि जुन कामले परमात्माको सेवालाई पूर्णता प्रदान गर्दछ त्यो हो परसेवाको कार्य, परोपकारको भावनाले

गरिएको कार्य आफूभन्दा पछि परेका प्रणीहरूको सेवामा केही न केही काममा आएर मात्र हामीसँग भएको समय, धन, विद्या, बुद्धि, बल सबथोक पवित्र हुन्छन्, सार्थक हुन्छन् । यदि अरूको भलाइ हुने काममा चाहिं कहिल्यै नफुक्ने गरी मुट्ठी बाँधिएको छ, केवल मुखले मात्र ईश्वरको स्तुति, पाठ र पूजा अर्चना चलिरहन्छ भने त्यो ईश्वरको वास्तविक सेवा हुँदैन । त्यसबाट न परमात्मा प्रसन्न हुन्छन्, न त्यो गर्नेले नै केही लाभ लिन सक्दछ । अरूको हितमा लाग्दै नलाग्ने भएमा कुनै पनि साधनमा खिया नलागी छोड्दैन अपवित्रता नटाँस्सिकन छोड्दैन । पानी कहीं जम्न पुग्यो भने त्यहाँ कति कति फोहोरमैला पैदा हुन थाल्दछ । तर निरन्तर बगिरह्यो भने त्यसमा अर्कै स्वच्छता हुन्छ । 'नदी वेगेन शुद्धयति' भन्ने भनाइ प्रसिद्धै छ । त्यसैले गच्छे आ–आफ्नो हुन्छ तर केही न केही त्याग चाहिं हुनैपर्दछ । त्यो त्याग पनि उपकारी छु, मैले कसैलाई उपकार गरैं भन्ने भाव राखेर होइन मैले प्रभुको सेवा गरेको हुँ' यो मेरो आफ्नो सहज कर्तव्य हो भन्ने ठानेर गर्नुपर्दछ । त्यस्तो पवित्र मनः- स्थितिले गर्न सकेमा गरिएको प्रत्येक त्यागले अमृतमय परिणाम प्रदान गर्दछ ।

आफूसँग भएको साधन केवल आफ्नै निम्ति मात्र भयो भने त्यो त्यसै खिया लागेर बिग्रेर जान्छ । पहिले विद्यालाई नै लिऔं । आफूले जानेको कुरा अरूलाई बताइदिने गऱ्यो भने आफ्नै विद्या अझ फैलन्छ, बढ्दछ । माथिल्लो कक्षाकाले तल्लो कक्षाकालाई, बढी पढेकाले कम पढेकालाई सिकाउने गऱ्यो भने सिकाउनेकै ज्ञान अझ बढ्दछ । तर मलाई भएकै छ यी नाथेहरूलाई किन सिकाइरहनुपऱ्यो भन्ने ठानेर गजक्क पऱ्यो भने पढेको कुरा नौ दिनमा नौलो हुन्छ, बीस दिनमा बिर्सिन्छ, महिना दिनमा मैलो

हुन्छ, पचास दिनमा पच्तछ, सात महिनामा सड्छ र वर्ष दिनमा बर्बाद हुन्छ । यो भुक्तभोगीहरूको अनुभव हो । त्यसैले जान्नेले नजान्नेलाई सिकाउनुपर्छ । त्यसबाट सिक्नेलाई भन्दा सिकाउनेलाई नै फाइदा हुन्छ । यही कुरा अरू त्याग र दानहरूमा पनि लागू हुन्छ । त्याग गरेर मानिसको आफ्नै महान कल्याण भइरहेको हुन्छ । यस प्रकार व्यक्ति र समाजका बीचको सुसम्बन्ध कायम गरेर सेवामय कल्याणकारी जीवन बनाउने महामन्त्र यस वाक्यले दिएको छ– 'तेन त्यक्तेन भुञ्जीथा:' ।

सम्पूर्ण सृष्टिचक्रतिर दृष्टि दिंदा सृष्टिको अङ्ग–अङ्गबाट त्यागको, दानको अविरल प्रवाह बगिरहेको देखा पर्दछ । सूर्यले अविराम गतिले प्रकाश र ऊर्जा प्रदान गरिरहन्छ, चन्द्रमा एक–नाससित प्रणीमात्रलाई आनन्द वितरण गर्दै वृक्षलता वनस्पतिहरूका निमित्त पोषणशक्ति प्रदान गर्दछन् । पृथिवी निरन्तर आफ्नो स्नेहमय काखमा प्रणीमात्रको हितका लागि अन्नादि उब्जाइरहन्छिन् । नदीहरू अमृतमय पानी वितरण गरिरहन्छन् । पहाडहरू थरीथरीका धातुका खानीहरू भए, पानीका ऊर्जाहरू भए संसारका लागि बाँडिरहेका देखिन्छन् । अन्य सम्पूर्ण सृष्टि नै त्यागमय देखिन्छ । त्यागपूर्वक जिउनु प्रकृतिको मूल नियमका रूपमा देखा पर्दछ । यस्तो स्थितिमा मानिस चाहिं केवल लिने मात्र गर्दछ दिने गर्दैन भने उसबाट प्रकृतिको शाश्वत नियमकै उल्लङ्घन भइरहेको हुन्छ । यस्तो व्यवहारबाट न व्यक्तिको न समाजको न राष्ट्रको कसैको पनि कल्याण हुँदैन । संसारमा तिनैले समाजको साँचो सेवा गरेर गएको देखिन्छ, जीवन तिनैको अनुकरणीय बनेको देखिन्छ जसले आफूसँग भएको साधनबाट प्रभुसेवा, समष्टि हितको कार्य गरेर सफल जीवन बिताए ।

त्यसैले 'तेन त्यक्तेन भुञ्जीथाः' भन्ने यस अमृतवचनभित्र मानवको सफल, सुन्दर र कल्याणकारी जीवनको रहस्य लुकेको छ । ऋग्वेदको स्पष्ट शिक्षा छ– 'मानव ! तिमीले सय हातले लिएका हुन्छौ, हजार हातले तिमीले दिनु पनि पर्दछ ।' 'शतहस्त: समाहर सहस्रहस्त: संकिर ।' यो जीवनमा पूर्णता प्राप्त गर्ने राजमार्ग हो ।

प्रथम मन्त्रको अन्तिम चरण भन्छ– 'मागृध: कस्यस्विद्धनम् ।' अर्थात् मानव ! तिमीले अरू कसैको धनमा लोभ गर्नु हुँदैन । यस मन्त्रांशमा स्वावलम्बनको शिक्षा दिएर चोरीको निकृष्ट कर्मबाट सधैं बच्ने प्रेरणा प्रदान गरिएको छ । मानिसले आफ्नो निमित्त आवश्यक साधन आफ्नै श्रमशक्तिको सदुपयोग गरेर इमानदारीसाथ जुटाउनुपर्दछ । अरूको कमाइमा आँखा गाड्ने लाछी बन्नु हुँदैन भन्ने शिक्षा यहाँ दिइएको छ । अरूको कमाइमा आँखा नलगाई आफ्नै कमाइबाट साधन जुटाएर जीविका चलाउने र त्यसरी आफ्नै श्रमबाट प्राप्त भएको साधनबाट पनि परमार्थको कार्य, अरूको भलाइको कार्य गर्ने वीरलाई नै 'पुरुषसिंह' भनिएको छ । यस्ता पुरुषसिंहहरूलाई नै श्रीले, समृद्धिले, लक्ष्मीले सधैं पछ्याउने गर्दछिन् । 'उद्योगिनं पुरुषसिंहमुपैतिलक्ष्मी:' । यस्ता पुरुषसिंहहरू आफ्नै पसिनाको कमाइमा सन्तुष्ट हुन्छन् । अरूका पसिनाको फल उनीहरूका लागि विषसरह हुन्छ । 'धन पराय विष ते विष भारी' । 'पर द्रव्येषु लोष्ठवत् ।' यो सफल जीवन जिउन चाहनेका लागि आधारभूत मर्यादा हो । आफ्नो पसिनाले कमाइएको सच्चाइको पवित्र आर्जनमा अरूको पसिना मिसिन आउँदा यस्ता धर्मप्राण आदर्श व्यक्तिहरू आफ्नो सम्पूर्ण साधन नै अपवित्र भएको सम्झिन्छन् ।

आज पनि यस्ता व्यक्तिहरू खोजिरहनु पर्दैन । धर्मप्रतिको विशुद्ध आस्था, ईश्वरप्रतिको पवित्र विश्वास राख्ने यस्ता कैयौं मानिस आज पनि पाइन्छन् ।

यस पवित्र मर्यादालाई साधनाशास्त्रहरूले पाँच महाव्रतहरूमध्येको 'अस्तेय' व्रत मानेका छन् । अस्तेय भनेको चोरी नगर्नु हो । वेददेखि लिएर पछिका तमाम धर्मशास्त्रहरू पुराण, रामायण र महाभारत आदि सम्पूर्ण वाङ्मयमा 'अस्तेय' व्रतको महत्त्व दर्साइएको छ । भगवान् बुद्धले पाँच महाशीलहरूमा 'अदिन्नादान' भनेर कसैले नदिईकन कसैको कुनै वस्तु लिनुरूप स्तेयलाई छोड्ने र अस्तेयको परिपालन गर्ने नैतिक मर्यादालाई समावेश गर्नुभएको छ । 'अदिन्नादाना वेरर्माना सिक्खापदं समादियामि ।' लोभले नै मानिसलाई चोरीतर्फ प्रेरित गर्दछ । त्यसैले प्रस्तुत मन्त्रांशमा- 'मागृधः कस्यविद्धनम्' भनेर लोभ नगर्ने शिक्षा दिइएको छ । पाप पहिले मनमा आउँछ । अनि व्यवहारमा ओर्लिन्छ । त्यसैले मनलाई नै निष्पाप बनाउने, विचार जगत्लाई नै परिष्कृत तुल्याउने स्वच्छ शिक्षा यसमा दिइएको छ । धर्मप्रतिको पवित्र आस्थाले नै मानिसलाई यसरी भित्रैदेखि निष्पाप बन्ने शक्ति प्रदान गरेर मानवतालाई जीवित राखेको छ । स्वयं चोरी नगर्ने मात्र होइन अरूको सामान फेला पर्दा समेत जसको हो उसलाई दिने सज्जनताको विकास गर्न यस मन्त्रले प्रेरणा दिन्छ ।

एउटा भौतिक जीवनको प्रेरक उदाहरण लिऔं । जनकपुर धामको एउटा अति सामान्य परिवारको प्रसङ्ग हो । मुरलीसर नगिचको एउटा गरीब परिवारमा विधवा आमा, एउटा छोरो र एउटी छोरी थिए । छोराको नाम रामु थियो । रामुकी आमा ज्यादै सच्चरित्र र इमानदार थिइन् । जस्तोसुकै दुःखको घडीमा पनि

उनले सत्य र इमानदारीलाई छोडेकी थिइनन् । परिवार नै पहिलो पाठशाला हो र आमाबाबु नै पहिला गुरु हुन् भन्ने कुरा समाज चिन्तकहरूले स्वीकारेको विश्वप्रसिद्ध कुरो हो । परिवारमा रहेको विश्वासमय पवित्र वातावरण र आमाको सरल, सहज र इमानदार व्यक्तित्वको प्रभाव रामुमा पनि परेको थियो । एकपटक रामुकी बहिनी सरला सिकिस्त बिरामी परिन् । पैसाको सधैँ सङ्कट जस्तै परिरहने परिवारमा महासङ्कट आइलाग्यो । रामुकी आमाले छोरीको उपचारका लागि केही पैसा सापटी माग्न रामुलाई काकाको घर पठाइन् । रामु जाँदै थियो । बाटामा एउटा पैसाको थैली उसले फेला पाऱ्यो । खोलेर हेर्दा त्यसमा ५०० पैसा रहेछन् । रामु निष्पाप मन भएको निर्लोभी युवा थियो । ऊ सोभै एक जना पत्रकारको छेउ गयो । उसले भन्यो मैले यो थैली फेला पारेको छु । यसको सूचना प्रकाशित गरिदिनुहोस् र यो जसको हो उसलाई आएर लैजान अनुरोध गरिदिनुहोस् । पत्रकार रामुको इमानदारीबाट ज्यादै प्रभावित भए । उनले निःशुल्क सूचना प्रकाशित गरिदिए । रामु काकाको घर गयो र आमाले भनेअनुसार सापटी लिई घर फर्केर सबै कुरा आमालाई सुनायो । रामुको इमानदारी र सद्भावना देखेर आमा गद्गद भइन् र स्यावासी दिइन् । सरलाको इलाज सापटी ल्याएको पैसाले गराउँदै थिइन । रोग नठम्मिएकाले सरलाको स्थिति भन्भन् कमजोर हुँदै गइरहेको थियो । छोरीको माया र पैसाको सङ्कटले रामुकी आमा साह्रै चिन्तित थिइन् । रामु पनि विलखवन्द परिरहेको थियो । त्यत्तिकैमा अखबारमा छापिएको सूचना पढेर थैलीका धनी रामुको घरमा आइपुगे । त्यस परिवारको इमानदारी र सच्चाइबाट उनी ज्यादै प्रभावित भए । उनी सम्पन्न मानिस थिए । त्यस परिवारप्रति श्रद्धा जागेर आएकाले उनले त्यो थैलीको पैसा सरलाको उपचारका

निम्ति दिए । 'आज पनि यस्ता व्यक्ति र यस्ता परिवार यस धर्तीमा पाइँदैछन् धन्य हो ।' भन्ने मनमनै सोच्दै उनि आफ्नो बाटो लागे । आफू स्वयं सङ्कटमा परेको बेला पनि अरूप्रतिको कर्तव्यमा आँच आउन नदिने यस्तो आदर्श व्यवहार गरेर मानवतालाई जीवित र जागृत राख्ने यस्ता धर्मप्राण व्यक्तिहरूको अस्तित्वले नै आज पनि संसारमा सदव्यवहार बाँचेको पाइन्छ । 'मा गृधः कस्यस्विद्धनम्' भनेर यस पवित्र मन्त्रांशले यस्तै सद्व्यवहारको शिक्षा दिएको छ ।

निर्लोभता र अस्तेय व्रतलाई संसारका सबै धर्महरूमा ठूलो सम्मान प्रदान गरिएको छ । आजका सभ्य, शिष्ट, समुन्नत देशहरूमा पाइने उल्लेखनीय कुराहरूमा कसैको हराएको माल सुरक्षित रूपले प्राप्त गर्न सकिने इमानदारीपूर्ण व्यवहारको विशिष्ट स्थान छ । त्यस्तो व्यवहारले गर्दा ती देशमा जाने यात्रुहरूमा ज्यादै राम्रो प्रभाव पर्दछ । अरूको हराएको सामान इमानदारीसाथ उसैलाई उपलब्ध गराइदिने सद्भावपूर्ण व्यवहार जहाँ रहन्छ मानवता, धर्म, न्याय, शान्ति सबै कुराको वास त्यहीं हुन्छ । त्यसैले यस पावन उपनिषद् शिक्षाको परिपालनतर्फ व्यक्ति, परिवार र समाज सबै स्तरमा जागरण ल्याउनु अत्यन्त कल्याणकारी हुन्छ । हामीले यसलाई जीवनको प्रमुख अनुशासनका रूपमा लिनु परेको छ । 'मागृधः कास्यस्विद्धनम् ।' व्यक्तिलाई यसप्रति निष्ठावान् तुल्याएर परिवार अथवा समाजमा यस्तो वातावरण बनोस् जसमा हराएको कुनै पनि वस्तु सजिलै प्राप्त हुन सकोस् अनि हाम्रो देशसेवा प्राणवान् बन्ने छ ।

# दोस्रो मन्त्र

अब हामी चिन्तनक्रमलाई अगाडि बढाऔं दोस्रो मन्त्रलाई लिएर । दोस्रो मन्त्रमा पनि पहिलोमा जस्तै तीन अंश छन् । तिनले कर्मविज्ञानसम्बन्धी छुट्टाछुट्टै सिद्धान्त बताएका छन् । मन्त्र यस प्रकार छ–

**कुर्वन्नेह कर्माणि जिजीविषेच्छतं समाः**
**यवं त्वयि नान्यथेतोऽस्ति न कर्म लिप्यते नर ॥२॥**

## सरल अर्थ

अर्थात् यस संसारमा मानिसले निरन्तर कर्म गर्दैरहेर मात्र सय वर्षसम्म बाँच्ने इच्छा गर्नुपर्दछ । यदि यसरी तिमीले कर्मठ बनेर जीवन जियौं भने तिम्रो जीवन सफल हुन्छ । यसबाहेक अर्को बाटो छैन । ईश्वरार्पण बुद्धिले कर्म गरेमा मानिसलाई बन्धनले बाँध्न सक्दैन । ऊ पाइला पाइलामा मुक्तितिरै अघि बढिरहन्छ ।

## तात्पर्य

यस मन्त्रका तीन सन्देशहरूमा पहिलोलाई लिऔं । पहिलो सन्देश भन्दछ– 'सय वर्षसम्म बाँच्ने इच्छा मानिसले राखोस् तर निष्क्रिय भएर होइन निरन्तर कर्म गरेर मात्र यो जिजीविषा राख्नुपर्दछ ।'

विभिन्न प्रकृतिका मानिसहरू संसारमा हुन्छन् । कसैलाई चिन्तन, मनन, ध्यान र विचारमन्थन नै बढी महत्त्वपूर्ण लाग्दछ । तर मानिस चिन्तनको जति नै गहिराइमा होओस्, ध्यान वा विचारमन्थनका जति नै फराकिलो क्षेत्र ओगट्न सफल बनिरहेको

होओस्, कर्मठ ती चिन्तनहरू र विचारमन्थनहरूको सार्थकता फेला पार्न सकिँदैन । कसैको मनमस्तिष्कमा फुरिरहेको उत्तमौत्तम चिन्तन र विचार श्रृङ्खलालाई लाभदायी रूपमा जनसमक्ष ल्याउन कर्मकै आश्रय नलिई हुँदैन । किन प्रवचन गर्नुपऱ्यो । किभक्तिसङ्गीतको माध्यमबाट जनमानससम्म पुऱ्याउनुपऱ्यो कि त पुस्तकपुस्तिकाको माध्यमबाट बोधगम्य तुल्याउनुपर्दछ । यी सबै कर्म नै हुन् । कर्म नभई कुनै योजना सफल हुँदैन । कर्मकै अवलम्बन नलिई, कर्मकै रूपमा अवतरित नगरी कुनै पनि कल्पनाले मूर्तरूप लिन सक्दैन । त्यसैले दोस्रो मन्त्रको पूर्वार्धमा भनिएको छ 'मानिसको जिजीविषा, (बाँच्ने इच्छा) सार्थक त्यसै बेला हुन्छ जब ऊ सम्पूर्ण आयुलाई कर्म गरेरै गुजार्न सक्दछ । कर्मठताविना बाँच्ने इच्छा पनि अधिकाररहित इच्छा हुनपुग्छ ।'

जीवनविज्ञानको सर्वोत्तम व्याख्याता मानिएको भगवद्गीतामा भगवान् श्रीकृष्ण भन्नुहुन्छ– 'कर्मको राम्रो अनुष्ठान गरेर नै राजर्षि जनक जस्ता आदर्श पुरुषहरूले संसिद्धि पाएका थिए । अर्जुन ! तिमीले पनि कर्मको राम्ररी अनुष्ठान गर्नुपर्दछ । आफ्नो लागि पनि तिमीले कर्म गर्नुपर्दछ ।'

**कर्मणैव हि संसिद्धिमास्थिता जनकादयः**
**लोसङ्ग्रहमेवाऽपि संपश्यन् कर्तुमर्हसि ॥**

समाजका लागि हुन सक्ने उपकार र लोकप्रेरणालाई नै यहाँ लोकसङ्ग्रह भनिएको छ । कर्मका आधारमा नै मानवजीवनको सम्पूर्ण उत्कर्ष निर्भर रहने भएकाले यहाँ 'एवं' शब्द लगाएर कर्महरू गर्दै रहेर मात्र बाँच्ने इच्छा राख्ने कुरा भगवान्ले बताउनुभएको छ । मानिसमा निरीह कर्मशक्तिको सही रूपमा प्रयोग

हुने हो भने दरिद्रता र अभावले मानिसलाई कहिल्यै पनि सताउन सक्दैन । सम्पूर्ण पछौटेपनबाट मुक्त हुने एउटै अमोघ उपाय छ कर्मशक्तिको सदुपयोग । केवल मनोरथ पर्याप्त हुँदैन, केवल कल्पना फलदायी हुन सक्दैन, कर्मकै आश्रयले मानिस मुक्तिगामी बन्न सक्दछ ।

एक जना चिन्तकलाई जीवन के हो भन्ने प्रश्नले सधैं खुलदुलीमा पारिरहेको थियो । जसलाई भेट्यो ऊ यही प्रश्न गर्दथ्यो– 'भन्नुहोस् जीवन के हो ?' एक दिन ऊ मानिसहरू ओहोर-दोहोर गरिरहने एउटा मूल बाटाको चौतारीमा बसेर आउने-जाने प्रत्येकलाई सोध्न लाग्यो – 'भन्नुहोस् जीवन के हो ?'

एक जना कवि आए । उनले प्रश्नको जवाफमा सत्य, शिव र सुन्दरको अनुभूति गर्नु नै जीवन हो भने । अर्का एक जना कलाकार आइपुगे । प्रश्नको उत्तरमा उनले भने – प्रत्येक वस्तुभित्रको जीवन्ततालाई सुन्दररूपमा फेला पारेर रमाउन सक्नु नै जीवन हो । अर्का दार्शनिक त्यहाँ आइपुगे । त्यो व्यक्तिले आफ्नो प्रश्न राख्यो– जीवन के हो ? दार्शनिकले जवाफ दिए– आफ्नो वास्तविक परिचय प्राप्त गर्नु नै जीवन हो । प्रश्नकर्ता अझै रनभुल्ल थियो । कसैको जवाफबाट पनि उसलाई समाधान मिलिरहेको थिएन । एकैछिनपछि एक जना पसिनाले भिजेको दाउरेले आएर त्यसै चौतारीमा भारी बिसायो । उसले यसो विश्राम मात्र गर्न के खोजेको थियो त्यो खुलदुलीले भरिएको मानिसले भन्यो– 'मैले धेरैसँग सोधिसकें तर सन्तोष हुने जवाफ कतैबाट आएन । अब म तिमीसँग सोध्दछु, भन दाइ ! जीवन के हो ?'

दाउरेले निधारका पसिना पुछ्दै प्रसन्न तर गम्भीर मुद्रामा भन्यो- 'हेर भाइ ! तिमीलाई कुनै कामै छैन कि कसो ? तिमीले यस तरिकाले जीवनलाई कहिल्यै पनि चिन्न सक्तैनौ । जीवन त विचारमा मात्र होइन व्यवहारमा छ । लौ हेर यी पसिनाले बताउँछन् । जीवन के हो भन्ने कुरा । कोरा तर्कको जाललाई हटाएर कर्ममय जीवन जिउन सिक अनि पसिनाको मोल सम्झ । अनि जीवनको अर्थ लाग्छ । सार्थक र शुभकार्यमा बग्ने पसिना नै जीवन हो ।' दाउरेको उत्तरले त्यस निष्क्रिय तर्कजालमा जीवनलाई खोज्ने व्यक्तिका आँखा खुले । कर्ममय जीवन यस उत्तरार्धको शिक्षा हो ।

अब दोस्रो मन्त्रको तेस्रो चरणबारे हामीले विचार गर्नुपर्छ । तेस्रो चरण भन्दछ- 'एवं त्वयि नान्यथेतोऽस्ति ।' अर्थात् यस प्रकार निरन्तर कर्म गरेर बाँच्ने इच्छा गर्नुबाहेक तिम्रा निम्ति अर्को कुनै बाटो छैन, उपाय छैन ।

पूर्वार्धमा भनिएको थियो- निरन्तर कर्म गर्दै रहेर सय वर्ष बाँच्ने इच्छा मानिसले राख्नुपर्दछ । तेस्रो चरणमा त्यसैको पुष्ट्याइँ गरिएको छ । यसबाहेक अर्को उपाय छैन भनेर ईशावास्य उपनिषद्ले जीवनको पूर्णता प्राप्त गर्ने समुन्नतिको पथमा अग्रसर बन्ने जीवन-दर्शन दिएको छ । व्यक्ति, परिवार वा समाज कोही होओस् कर्ममय नबनी समुन्नतिको पथमा अग्रसर बन्न सक्दैन । संसारमा कर्मको अवलम्बन नलिई कोही पनि समुन्नतिको पथमा अग्रसर बनेको पाइँदैन । कुनै पनि व्यक्ति, कुनै पनि परिवार, कुनै पनि समाज वा राष्ट्र निष्क्रिय भएर हात बाँधेर बसेर धनी भएको, सम्पन्न भएको कहीं देखिँदैन । अकर्मण्यताले त केवल दरिद्रता, अभाव, आर्थिक सङ्कट सिवाय अरू थोक ल्याउँदैन । संसारमा

जो उँभो लागेका देखिन्छन्, ती सबै कर्मकै भरमा उँभो लागेका छन् । आफूसँग भएको कर्मशक्तिको उपयोग गर्न नजान्नेहरूले केवल परमुखापेक्षी बनेर बाँच्नुपर्ने हुन्छ । संसारमा जता हेऱ्यो धनैधन छ । सम्पूर्ण पृथ्वी वसुन्धरा छिन् रत्नगर्भा छिन् । तर त्यो वस्तु प्राप्त गर्न, त्यो रत्न फेला पार्न कर्मशक्तिकै आश्रय लिनुपर्दछ । महाभारत भन्दछ– 'सम्पूर्ण पृथ्वीबाट सुनैसुन कलाउन सकिन्छ । त्यो सौभाग्य प्राप्त गर्न सक्ने केवल तीन थरी मानिस हुन्छन् – शूरा, राम्ररी पढेर दक्षता पाएका र आफूसँग भएको प्रत्येक साधनको सही उपयोग गर्न जान्ने ।'

**सुवर्णपुष्पां पृथ्वीं चिन्वन्ति पुरुषास्त्रयः**
**शूरश्च कृतविद्यश्च यश्च जानाति सेवितुम् ॥**

प्रस्तुत मन्त्रको 'एवं त्वमि नान्यथेतोऽस्ति' भन्ने अंशको सङ्केत यतैतिर छ । तिमी पनि यस्तै नवनुञ्जेल उँभो लाग्न सक्तैनौ । यही भन्दछ यस मन्त्राशले स–साना कष्टहरूबाट भाग्ने, ज्ञान, दक्षता, शिल्प र योग्यता प्राप्त गर्नपट्टि प्रयत्नशील नबन्ने लाछीबाट समुन्नतिको आशा गर्न सकिँदैन । विघ्न–बाधाहरूलाई नै साथी तुल्याएर सधैं ज्ञान बढाउन, शिल्प र योग्यता बढाउन चाहने आफूसँग भएको प्रत्येक वस्तुको केवल सदुपयोग गर्न चाहने सुयोग्य कर्मकर्ता नबनुन्जेल न पृथ्वी, न आकाश, न कुनै देवता कोही पनि सहयोग गर्न तयार हुँदैनन् । श्रुतिको अमर वाणी छ – 'नाश्रान्तस्य संख्याय देवाः' परिश्रम नगर्नेलाई, अल्छीलाई कुनै दिव्यशक्तिले कहिल्यै मद्दत गर्दैनन् । भगवान् श्री कृष्ण भन्नुहुन्छ– 'खुसी हुन्छन् सबै द्यौता कर्मशक्ति जगाउँदा । हात बाँधी बसेमा त भाग्छन् सौभाग्य सम्पदा ।'

आफ्नै अकर्मण्यताले गरीब र पराश्रयी बनेको एक जना मानिस निराश मनले भित्रभित्रै जलेर बाटामा कतै गइरहेको थियो । आफूसँगका अरूले गरेको प्रगतिप्रति उसलाई डाह थियो । अनेकौं तर्कनाहरूले उसको मनलाई आन्दोलित तुल्याइरहेका थिए । बाटामा एक जना ठूला सन्त आइरहेका थिए । त्यो गरीबले गएर सन्तलाई नमस्कार गऱ्यो । आकृतिले निकै तन्दुरुस्त देखिने तर मुखमा विषादको रेखा दौडिरहेको त्यस व्यक्तिलाई लक्ष्य गरेर सन्तले कुशलक्षेमबारे प्रश्न गरे । त्यस व्यक्तिले ईश्वरप्रति नै आक्रोश पोख्दै भन्यो– 'खै के कुशल छ भनौं । सँगैमा मेरै छिमेकका अमुक–अमुक व्यक्ति आज सम्पन्न र खुसी छन् । म त्यहीं बस्छु तर म चाहिं कहिल्यै सम्पन्न बन्न सकिन । ईश्वर पनि साह्रै निर्दयी र पक्षपाती रहेछन् । मलाई चाहिं यस्तो' अवस्थामा पारिदिएका छन् । अरू चाहिं सम्पन्नताको आनन्दमा डुबेका छन् ।' यति भन्दै ग्लानि र विषादको भुँवरीमा परेको त्यस व्यक्तिले लामो सास फेरेर सन्तको मुखतिर हेऱ्यो । सन्तलाई त्यसको मनःस्थितिप्रति दया लागेर आयो । उनले त्यसलाई सम्झाइदिने निश्चयले भने – 'भाइ तिमीले राम्रो सोच्न सकेका रहेनछौ । अहिले तिमीले ईश्वरप्रति क्षमा माग्नुपर्दछ । हेर ! ईश्वरले त तिमीलाई दिनुसम्म दिएका छन् । यति राम्रा सग्ला हातपाउ दिएका छन् । हेर्न सक्ने आँखा, सुन्न सक्ने कान दिएका छन् । संसारमा कति अन्धा छन्, कति बहिरा । कति लङ्ङडा छन्, कति डुँडा । तिम्रा त यस्ता सशक्त हात–गोडा रहेछन् । प्रत्येक व्यक्तिमा काम गर्ने शक्ति परमेश्वरले दिएका हुन्छन् । त्यस शक्तिको सदुपयोग गरेमा कोही पनि गरीब हुँदैन । जब कर्मशक्तिको मानिसले अपव्यय गर्दछ अनिमात्र ऊ गरीब हुन्छ । तिमी गरीब भएको ईश्वरले गर्दा होइन, ईश्वरले दिएको अमूल्य साधन र शक्तिको सदुपयोग गर्न नजानेर हो । तिमी सङ्कल्प जगाऊ, काम नगरी एकैछिन पनि

नबस्ने बानी बसाल । यी सशक्त पाखुरीको काम लेऊ । सीप सिक । तिमी केही दिनमै धनी हुन्छौ । ईश्वरलाई त तिमीले कृतज्ञता जनाउनुपर्दछ । संसारमा यस्ता मान्छे पनि छन् जो आँखाले हेर्न सक्तैनन्, कानले सुन्न सक्तैनन्, हात-गोडाले काम गर्न सक्तैनन् । तर तिमी सबै थोक गर्न सक्छौ । ईश्वरले दिएको शक्ति र साधनको सदुपयोग मात्र गर । तिमी उँभो लाग्ने छौ । यसका लागि तिमीले अरूप्रति डाह राख्न छाडेर आफूमा निहित शक्तिको प्रयोग गर्ने गर्नुपर्दछ ।'

सन्तका वचनले त्यस मानिसको मनमा उत्थानको नयाँ उज्यालो भरिदिएका थिए । उसलाई जीवनको मर्म नै प्राप्त भएको अनुभव भयो । सन्तले बताएको बाटो हिंड्ने उसले निश्चय गऱ्यो । कर्मठतामा नै जिन्दगीको सफलता रहेछ भन्ने उसको समझ भयो । आफ्नो कर्मशक्ति जगाएर उसले केही दिनैमा आफूलाई समुन्नतितर्फ अग्रसर तुल्यायो । त्यस बेला बितेको समयमा बाटो बिराएर अकर्मण्य र आहारिसे भएर समय बिताउने गरेकामा आफूप्रति ग्लानि भइरहेको थियो । पछुतो भइरहेको थियो ।

प्रस्तुत मन्त्रले 'त्वयि नान्यथा ईतः अस्ति' भनेर यस्तै कर्मशक्तिको जागरणतर्फ ध्यान आकृष्ट गरेको छ । जहाँ सीप छैन, दक्षता छैन, काम गर्ने लगन छैन, कामबाट बढीभन्दा बढी फुर्सद लिएर मनोरञ्जनको नाममा समय र श्रमशक्तिको अपव्यय भइरहेको हुन्छ त्यहाँ प्रगति कसरी होओस् ? समुन्नति कताबाट आओस् ? नीति वचनहरूले सम्झाइरहेका छन्-

**सकल पदारथ यहि जगमाहि**
**कर्महीन नर पावत नाहिं ॥**

कर्म कसरी गर्ने ? अब त्यसबारे सोच्नुपर्छ । दोस्रो मन्त्रले चौथो र अन्तिम चरणमा कर्म गर्ने कुशलताका बारेमा बताएको छ । मन्त्रको चौथो चरण भन्दछ- 'न कर्म लिप्यते नर ।' अर्थात् मनुष्यलाई कर्मको बन्धनले बाँध्न सक्तैन, लिप्त तुल्याउन सक्दैन । निरन्तर कर्म गर्दै रहेर पनि कर्मको बन्धनबाट पूर्ण रूपले मुक्त रहन सकिन्छ । यसैलाई 'कर्मविज्ञान' भनेर मानिएको छ । यस प्रकारको कर्मविज्ञानलाई प्राप्त गर्न ईश्वरार्पण बुद्धिले कर्म गर्ने अभ्यास बसाल्नु आवश्यक हुन्छ । यदि ईश्वरको सेवाका रूपमा निष्काम भावले कर्म गर्न सक्यो भने प्रत्येक कर्म योग हुन्छ । कुशलतासाथ लिप्तता नरहने गरी पछि बन्धन खडा हुन नसक्ने गरी गरिएको कर्म नै 'योग' बन्दछ, 'योगः कर्मसु कौशलम् न कर्म लिप्यते नर' भनेर यस मन्त्रमा यतैतिर इसारा गरिएको छ ।

मानिसको सम्पूर्ण प्रगति कर्ममा अवलम्बित छ । आजभन्दा भोलि, भोलिभन्दा पर्सि अगि बढ्न सक्ने बनौं भन्ने सोच्ने हो भने त्यसका निमित्त एकमात्र आधार कर्मशक्तिको अवलम्बन नै हुन्छ । अकर्मण्यको प्रगति सम्भव छैन । त्यसैले प्रगतिका लागि समुत्थानका लागि कर्म सर्वोपरि सहायक हुन्छ । मानौं प्रगति कसैलाई चाहिएनछ, समुन्नति अपेक्षित रहेनछ । जे छ त्यतिमै ऊ सन्तुष्ट रहेछ भने पनि जे छ त्यतिलाई नै कायम राख्न पनि कर्म नगरी हुँदैन । शरीरयात्रासम्म पनि कर्मकै अवलम्बनविना चल्दैन । त्यसैले कर्म त शरीरधारी यावत् प्राणीहरूका निम्ति मूलभूत अवलम्बन नै हो । त्यो मूलभूत अवलम्बनलाई यस्तो कौशलसाथ गर्नुपर्‍यो । जसमा पछि कर्म बन्धन खडा हुनै नसकोस् । त्यसै बारेमा यस मन्त्रले प्रेरणा जगाइरहेको छ ।

कर्मले बन्धन कुन स्थितिमा पैदा गर्दछ ? विचार गरौं जब जीवात्मा सकाम भावनाले ममता र आशक्तिमा जेलिएर कर्म गर्दछ त्यस बेला उसबाट हुने प्रत्येक कर्मले बन्धन खडा गर्दछ वास्तवमा जीवन भन्नु नै संस्कारहरूको सजीव रूप हो । आफ्ना कर्मले सिर्जिएका संस्कारहरूको सँगालो नै पनि यसै जाँदैन । त्यसले केही न केही संस्काररेखा कोरेरै छोड्छ । केही न केही फल दिएरै कुनै पनि कर्म सम्पन्न हुन्छ । त्यस्तो कर्मले सिर्जिने संस्काररेखा कहिलेकाहीं कर्तालाई बाँध्ने खालको हुन्छ । कहिलेकाहीं चाहीं कर्तालाई बन्धनमा नपारी लोककल्याणको दृष्टिले सहयोगी बनेर कर्तालाई मुक्तिका निम्ति सहायता पुऱ्याउँछ । कर्मबाट पैदा हुने प्रत्येक संस्कारलाई, परिणामलाई मुक्तितिरै डोऱ्याउने मोक्षतिरै लैजाने तुल्याउनुमा नै यस मन्त्रको इसारा छ । 'न कर्म लिप्यते नर' ।

जीवात्मालाई बन्धनले तब घेर्न थाल्दछ जब ऊ परमात्माका वस्तुहरूलाई आफ्नो मान्न थाल्दछ । संसारका यावत् पदार्थहरू परमात्माका हुन् । हामी त तिनको सञ्चालनमा, प्रयोगमा निमित्तसम्म मात्र हौं । जस्तो कुनै मानिस खजाञ्ची छ । ब्याङ्कको सम्पूर्ण आर्थिक कारोबारमा उसको प्रत्यक्ष हात हुन्छ । दिनहुँ ऊ लाखौं-करोडौं रूपियाँ आफ्नै हातले चलाउँछ । तर उसको मनमा स्पष्ट भाव रहन्छ - यी सबै रूपियाँ ब्याङ्कका हुन् । म त व्यवस्थाका लागि यिनलाई चलाउने मात्र हुँ । यी रूपियाँ मेरा होइनन् । यस्तो निश्छल, निष्कपट भावले ब्याङ्कका रूपियाँ ब्याङ्ककै सम्झेर काम गरूञ्जेल उसलाई कुनै अप्ठ्यारो पर्दैन, कुनै दोष लाग्दैन । उसको इमान्दारीपूर्ण सेवाको कदरस्वरूप बरु उसलाई पदोन्नति प्राप्त हुन्छ । तर जुन दिन उसले सोच्यो

यसबाट अलिकति यताउता गरेर आफ्नो बनाउन पाए हुन्थ्यो, छलछाम गरेर आफ्नो निमित्त झिक्न पाए हुन्थ्यो, त्यसै दिनदेखि उसलाई अनर्थले घेर्न थाल्दछ । उसलाई अपराधीका रूपमा लिइन्छ र जागिर जान्छ, दण्ड-सजाय हुन्छ । सकाम कर्म र निष्काम कर्म यसैबाट छुट्टिन्छ । सकाम कर्म गर्ने प्रवृत्तिमा मानिसले आफ्नो सीमालाई मर्यादालाई नै बिर्सिएर प्रभुका वस्तुलाई पनि आफ्नो मानेर तिनमा आफ्नोपनको मोहर लगाउने कोसिस गर्दछ । अनि प्रकृतिको शाश्वत विधानअनुसार जसबाट अपराध भएको ठहर्छ । तरह-तरहका अनर्थहरू आइपर्दछन् । त्यसैले उसलाई कर्मको दुष्परिणाम प्राप्त हुन्छ ।

मुनिमलाई त्यसबेलासम्म आपत्ति आउँदैन जुन बेलासम्म ऊ सबै रुपियाँ-पैसा सेठजीको हो भन्ने समझदारी राखेर आफू अलिप्त रहन्छ तर यसको उल्टो जब ऊ आसक्त भयो र सेठजीको धनलाई आफ्नो धन ठानेर लप्पनछप्पन गर्न थाल्यो मुनिमको जीवनमा सङ्कटका वादलले घेर्न थाल्दछन् । त्यसैले प्रत्येक वस्तु प्रभुको हो म त उहाँकै सेवाका निम्ति त्यसको प्रयोग गर्ने प्रयोक्ता मात्र हुँ भन्ने समझदारी राखेर लोकहितको भावनाले कर्म गर्दै जीवन जिउने मानिसले कर्मको बन्धनमा कहिल्यै पर्नुपर्दैन । यस्तै समझदार व्यक्तिलाई शाश्वत शान्ति, सुख र सन्तोषले वरण गर्दछ । भगवद्गीतामा भनिएको छ- जो युक्त छ, परमात्माको अनन्त महिमालाई सम्झेर उहाँप्रति आस्थावान् बन्दै शुद्ध र निष्काम भावले कर्मको फल सबै प्रभुमा नै अर्पण गरेर जीवन जिउँछ त्यसलाई नैष्ठिकी शान्ति प्राप्त हुन्छ । जो चाहिं अयुक्त छ परमात्माको सत्ताप्रति आस्था राख्दैन र संसारका स्वामीलाई केही अर्पण नगरी उनका वस्तुलाई आफ्नो ठानेर ममत्वसाथ कर्मको

फलको कामना राखेर आसक्तिसाथ जिउँछ, त्यसले निश्चित रूपले बन्धनमा पर्नुपर्दछ ।

**युक्तः कर्मफलं त्यक्त्वा शान्तिमाप्नोति नैष्ठिकीम्**
**आयुक्तः कामकारेण फले सक्तो निवध्यते ॥**

भगवद्गीता ५/२१

मूल कुरा कर्मी होइन्, कर्मयोगी बन्न यस मन्त्रले प्रेरित गरेको छ । प्रत्येक कर्म पूजा बन्न सक्तछ, योग बन्न सक्तछ जब हामी परमात्माप्रति सही निष्ठा राखेर अनासक्त भावले कर्म गर्न जान्दछौं । कर्मले बन्धनलाई पार्ला भन्ने भय मान्नुहुँदैन । परमात्मालाई सधैं ध्यानमा राखेर निष्काम भावले लोकहितका लागि कर्म गर्ने गरे तिमीमा कर्मको अवलेप लाग्न सक्दैन । यही शाश्वत आश्वासनसाथ दोस्रो मन्त्रको शुभ सन्देश समाप्त हुन्छ ।

# तेस्रो मन्त्र

तेस्रो मन्त्रमा आध्यात्मिक साधना गर्नेहरूको गतिबारे बताइएको छ ।

**असुर्या नामते लोकाअन्धेन तमसावृताः**
**तांस्ते प्रेत्याभिगच्छन्ति ये के चात्महनो जनाः ॥३॥**

## सरल अर्थ

एक थरी लोकहरू जीवात्माले जन्म लिने जुनीहरू ज्ञानसूर्यको प्रकाश कहिल्यै नपुग्ने, सधैं अज्ञानरूप गाढा अन्धकारले नै भरिएका छन् । जो साधनाहीन भएर, आत्मविकासतर्फ रत्तिभर नलागी केवल शारीरिक सुखसयलमा मात्र अलमलिएर जीवन गुजार्दछन्, ती आत्मघाती हुन् । आत्महत्या गर्ने आफैं आफूलाई मार्ने ती स्थूल बुद्धि हुनेहरू मरेर तिनै अन्धकारपूर्ण लोकहरूमा, तिनै जडतापूर्ण जुनीहरूमा जान्छन् ।

## तात्पर्य

मनुष्य जीवन आत्मविकासका निम्ति हो । मनुष्य जीवनमा जेजति साधन र समय प्राप्त हुन्छ सबै आत्मविकासका निमित्त प्राप्त भएको हुन्छ । मानिससँग आज जे छ जति मङ्गलमय साधनहरू छन् तिनको अरू विकास उसले गर्नुपर्दछ । शरीरमा कर्मशक्ति छ, विकसित गर्नका लागि परमात्माले दिएको विवेकशक्ति छ यी सबै जीवन विकसित गर्नका लागि परमात्माले दिएका शक्तिहरू हुन् । मानिससँग भएका प्रत्येक साधनको केवल सदुपयोग मात्र हुनुपर्दछ, दुरुपयोग होइन । यो मानव जीवनका

निमित्त निर्धारित गरिएको मर्यादा हो । शाश्वत अनुशासन हो । यस अनुशासनको, यस मर्यादाको परिपालन गर्ने मानिसलाई आत्मविकासको सुन्दर अवसर प्राप्त हुन्छ । ऊ समाजका निमित्त कल्याणकारी बनेर बाँच्तछ र अन्त्यमा मुक्तिको भागी बनेर मरेर पनि बाँचिरहेको हुन्छ । यस्ता साधकले दिव्यलोक प्राप्त गर्दछन् । यही आत्मकल्याणको बाटो हो ।

अर्को असुरताको लोक छ । यहाँ 'अन्धेन तमसा वृताः' 'असुर्या नाम ते लोकाः' भनेर त्यही असुरहरूको लोकतिर इशारा गरिएको छ । 'असुर' शब्दबाट झट्ट सुन्दा बुझिने पौराणिक कथाहरूमा वर्णित लामा दाह्रा, भयङ्कर मुख र आँखा, डरलाग्दो कपाल भएका असुरहरूलाई यहाँ सम्झिनुपर्दैन । अनुहारले अत्यन्त राम्रो भएर पनि मानिस असुर हुन सक्तछ । असुरको अर्थ हो असु भनेको प्राण, त्यसैमा सधैं रमिरहने । केवल प्राणभरणलाई नै सर्वस्व संझिने, शरीरको मोटाइ र तन्दुरुस्तीलाई मात्र सर्वस्व ठानी तपस्याहीन, संयमहीन, मर्यादाहीन जीवन जिउने र मानसिक विकास, बौद्धिक समुन्नति, आध्यात्मिक समुत्थान जस्ता सारभूत पक्षहरूको मूल्य नै नसम्झिने 'शरीरमानव' लाई नै 'असुर' भनेर साधनाशास्त्रहरूले मानेका छन् । जहाँ तपस्या, सहिष्णुता हुँदैन, असहिष्णुता र रागपूर्ण पूर्वाग्रह र अशान्ति हुन्छ । अज्ञान, कलह, शङ्का क्लेश जस्ता विकृतिहरूको गाढा कालिमाले छोपेको हुन्छ । जो आफैंलाई मार्ने, सताउने, यातना दिने आत्माहरू छन् तिनले त्यस्तै लोकमा, त्यस्तै जुनिमा पुग्नुपर्दछ ।

आत्महा भनेर कसलाई सम्झने ? आत्महा त्यो हो जसले मुक्ति, कैवल्य, निर्वाण, मोक्ष जस्तो पूर्णतम सुख र शान्तिको शाश्वत स्थान प्राप्त गर्ने मनुष्य बनेर आएको आफ्नो आत्मालाई

अज्ञानमय बाटोमा लगेर, आत्मविकासविरूद्ध दुष्कर्मतिर प्रेरित गरेर पछि तल झर्नुपर्ने बन्धनमा पर्नुपर्ने भयावह स्थितितिर डोऱ्याइरहेको हुन्छ त्यही आत्माघाती हो, आत्महा हो ।

हात त चिम्पाञ्जी, ढेडु, वनमान्छे, वानरलाई पनि प्राप्त छन् परन्तु विवेकसाथ आफूभन्दा पछि परेकाहरूका लागि मद्दतको कार्य गरिदिने हात केवल मानिसले मात्र पाएको छ । अरूका आँसु पुछिदिन अघि सर्ने हात केवल मानिसलाई प्राप्त छन् । मन त पशुपक्षी, कीटपतङ्गसँग पनि छ परन्तु अरूको भलो चिताउने मन केवल मानिसलाई प्राप्त छ । आँखा त सबै प्राणीलाई प्राप्त छन् तर अरूको आँसु देख्दा दयाले आँसु बगाउने आँखा केवल मानिसलाई प्राप्त छन् । शब्दको, ध्वनिको, ध्वनिको, आवाजको आ-आफ्नो विशेषता राख्ने एक खालको बोली सबै प्राणीलाई प्राप्त छ । तर कसैको जलिरहेको हृदयमा सान्त्वनाद्वारा अमृतको सेचन गरिदिन सक्ने कल्याणकारी वाक्शक्ति केवल मनुष्यलाई प्राप्त छ । यी सबै ठूला-ठूला कुरा मानिसलाई किन प्राप्त भएका ? किनभने मनुष्य जीवन त मुक्तिको द्वार हो । पशुले गरे जति मात्र गरेर मानिसलाई पुग्दैन । खानका लागि बाँचेर मानिसलाई पुग्दैन । उसले त बाँच्नका लागि खानुछ । जीवनलाई सुन्दर, शान्तिमय, सेवामय बनाउँदै अन्त्यमा पूर्णतम प्रभुलाई प्राप्त गर्नुछ । त्यसैले प्रभुले मानिसलाई लक्ष्य ठूलो दिनुभएको छ । अरू प्राणीलाई प्राप्त नभएका साधन प्रदान गरेर परमात्माले गरेको असीम कृपाप्रति मानिसले समझदारी र कृतज्ञता राख्नुपर्दछ र तिनको सदुपयोग गर्नुपर्दछ । केवल सदुपयोग, दुरूपयोग होइन ।

जब यी कल्याणकारी साधनहरूको दुरूपयोग गरेर मानिस शुभसङ्कल्प लिने मनले अशुभ-सङ्कल्प लिन थाल्दछ, अरूको

आँसु पुछिदिन सक्ने हातले अरूको हानि-नोक्सानीको काम गर्न थाल्दछ, अरूको हृदयमा अमृतको सेचन गर्न सक्ने वाणीले जब अरूको हृदयमा आघात पार्न थाल्दछ । अनि मानिस 'असुर' बन्न पुग्दछ । त्यसरी अरूलाई सताउने कामबाट अरूको होइन स्वयं सताउनेकै अहित भइरहेको हुन्छ । त्यस्तै मानिस 'आत्महा' हुन्छ, आफैंलाई सताउने हुन्छ । त्यस्ता मानिसलाई प्राप्त हुने अज्ञानको अन्धकारले ढाकिएका जडतापूर्ण लोकहरूलाई, जुनीहरूलाई लिएर यस मन्त्रमा 'असुर्या नाम ते लोका अन्धेन तमसा वृताः' भनिएको छ र आफूसित रहेको परमात्माको कृपास्वरूप प्राप्त हुन आएको कल्याणकारी शक्ति र साधनको दुरुपयोग गरेर आफ्नै अहित गर्नेहरूलाई यहाँ 'आत्महनो जनाः' भनिएको छ ।

# चौथो मन्त्र

चौथो मन्त्रमा परमात्माको स्मरण गर्दा ध्यान दिनुपर्ने उहाँका विशेषताहरूको परिचय दिइएको छ ।

**अनेजदेकं मनसो जवीयो नैनद्देवा आप्नुवन् पूर्वमर्षत्**
**तद्धावतोऽन्यानत्येति तिष्ठत्तस्मिन्नपो मातरिश्वा दधाति ।।४।।**

## सरल अर्थ

परमात्मा अचल हुनुहुन्छ । उहाँ यताउता हिँडडुल गर्नुहुन्न, आफ्नै दिव्य धाममा विराजमान रहनुहुन्छ । परन्तु आफ्नै ठाउँमा नित्य अवस्थित रहेर पनि उहाँ मनभन्दा पनि द्रुत वेगले यत्रयत्र पुगिरहेको हुनुहुन्छ । परमात्मालाई हिँडिरहेका बेला भेट्ने शक्ति सम्पूर्ण देवताहरूमा पनि छैन । परमात्मा आफूएकै ठाउँमा बसी - बसी अरू दगुरिरहेकाहरूलाई उछिनिदिनुहुन्छ । परमात्माबाटै शक्ति पाएर वायु आदि देवताहरू प्राणीहरूको हितका लागि जलवृष्टि आदि गराउन सफल हुन्छन् ।

## तात्पर्य

यस मन्त्रले परमात्माको अनन्त शक्तिसम्पन्न स्वरूपको परिचय दिएको छ । सर्वप्रथम अनन्त रूपमा प्रकट हुने गरे तापनि परमात्मा एकै हुनुहुन्छ भन्ने सारभूत कुरा यहाँ बताइएको छ । भगवान्का अनेकौं रूप हुन्छन् तर पनि भगवान् एउटै हुनुहुन्छ भगवान्लाई अनेक ठान्नु पारमार्थिक पथका उपासकहरूका लागि उपयुक्त हुँदैन । सूर्यले आफ्ना लाखौं-करोडौं किरणहरूबाट जगत्का निमित्त प्रकाश र ऊर्जा दिन्छन् । परन्तु ती सबै किरणहरूका प्रकाशदाता, ऊर्जादाता सन्तप्त प्राणीहरू र वृक्षलता वनस्पतिहरूलाई अमृतमय पोषण प्रदान गर्दछन् तर चन्द्रमा स्वयं

एउटै छन् । त्यसै गरी आफ्ना अनन्त असङ्ख्य विभूतिहरूद्वारा विश्वसञ्चालन गर्दै रहेर पनि परमेश्वर, परमात्मा, भगवान् एउटै हुनुहुन्छ । भगवान् भन्नुहुन्छ- 'म यौटै सत्य भै फुर्छु गरी नाना थरी रचना । हजारौँ रूप छन् मेरा म नै झल्कन्छु ती सबमा । (समपर्णबाट)

भगवान् अनन्त शक्तिसम्पन्न हुनुहुन्छ । त्यसैले उहाँको गति अनन्त छ, असीम छ । उहाँ बसीबसी सबै ठाउँमा पुग्नुहुन्छ । उहाँलाई कहीं पुग्न गोडा चाहिँदैनन् । केही गर्न हात चाहिँदैनन् । केही सोच्न मन चाहिँदैन । वेदस्ततुतिमा श्रुतिहरू भन्दछन्- 'प्रभो हजुर स्वयं इन्द्रियनिरपेक्ष रहेर पनि सम्पूर्ण कारकशक्तिहरूका स्वामी हुनुहुन्छ । जहाँ पनि पुग्न र जे काम पनि गर्न सक्नुहुन्छ । हजुरको शक्तिद्वारा क्रियाशील बनेका देवताहरू हजुरकी शक्तिरूपा प्रकृतिको सहाराबाट आवश्यक वस्तु प्राप्त गर्दछन् र हजुरलाई नै समर्पण गरेर प्रसादका रूपमा ग्रहण गर्दछन् । हजुर सम्पूर्ण दिव्यशक्तिहरूको नित्यनिकेतन हुनुहुन्छ ।

**त्वमकरणः स्वराडखिलकारकशक्तिधर-**
**स्तव वलिमुद्वहन्ति समदन्त्यजयाऽ निमिषाः ॥**

यसरी देवताहरूका पनि शक्तिस्रोतका रूपमा परमात्माको प्रतिपादन गरेर यस मन्त्रले जीवमात्रलाई आफूमा म कर्ता हुँ भन्ने भाव आउन नदिई प्रभुको अनन्त शक्तिको, असीम गतिको, असङ्ख्य विभूतिहरूको सम्मान गर्दै निरभिमान भएर कृतज्ञ भावले प्रभुसेवाका रूपमा कर्म गर्ने प्रेरणा दिएको छ ।

आजको संसारमा सबैभन्दा बढी गति भएको वस्तु भनेर केलाई लिने ? रेल, मोटर, हवाईजहाज यी सबैभन्दा पनि रकेट त कता-कता गति भएको वेगिलो हुन्छ । तर यी सबैको वेगभन्दा पनि मनको वेग त झन् बढी तेजिलो हुन्छ । यी चाँडोभन्दा चाँडो दगुर्ने

यानहरूलाई पनि केही पुग्न समय लाग्छ । परन्तु मनलाई त कहीँ पुग्न समयै लाग्दैन । मानिस शरीरले आफ्नै घरको कोठामा बसिरहेको होओस् तर मनले ऊ सारा संसार चहारेर क्षणभरमै घर फर्किरहेको हुन्छ । हातगोडासम्म पनि चलाइरहनुपर्दैन । मनले बसी-बसी छिनमा विश्वयात्रा गराइदिन्छ । त्यस्तो संसारका सम्पूर्ण गतिमान् पदार्थहरूलाई अकल्पनीय रूपमा उछिन्न पुग्ने द्रुतगामी मनको पनि परमात्माको सामु केही लाग्दैन । त्यसले पनि परमात्माको गति त अगम रहेछ भनेर हार खाएर फर्किनुपर्दछ । त्यहि हालत वाणीको छ । परमात्माको गति आँक्न मनले र स्वरूपको वर्णन गर्न वाणीले हरेस खानुपर्दछ । मन र वाणी दुवै परमात्माको अनन्त गति र असीम स्वरूपको सामु हरेस खाएर फर्किन बाध्य हुन्छन् । 'यतो वाचो निवर्तन्ते अप्राप्य मनसा सह' श्रुतिहरूले परमात्माको अनन्त गरिमालाई यसरी गाएका छन् । मनमात्र हैन बुद्धि, चित्त कसैको पनि पहुँच परमात्मामा हुँदैन । असीमलाई ससीमले कसरी भेट्ने ? व्यापकलाई व्याप्यले कसरी भेट्ने ? महासागरलाई तलाउले कसरी आँक्ने ? मनमा सङ्कल्प विकल्पको शक्ति भर्ने, बुद्धिमा विवेकशक्ति दिने प्रभु नै हुनुहुन्छ । देवताहरूमा रहेका दिव्यशक्तिहरू भगवान्द्वारा नै दिइएका हुन् । अनि मन, बुद्धि, चित्तले प्रभुलाई कसरी जान्ने ? देवताहरूले प्रभुको अनन्ततालाई कसरी पाउने ? 'विज्ञातारमरे केन विजानीयात्' । जसले सबैमा जान्ने शक्ति प्रदान गरेको छ उसलाई सम्पूर्ण रूपमा कसरी जान्ने ? सृष्टिको अङ्ग अङ्ग जसद्वारा परिचालित छ उसको अनन्त शक्तिको महिमालाई स्वीकार गरेर, अनेकभित्र व्याप्त रहेको एक भगवत्सत्तालाई सम्मान गरेर विनम्र भावले, सेवाको भावले शुभ कर्म गर्दै निरभिमान बनेर जिउन यस पावन मन्त्रले इङ्गित गरेको छ ।

# पाँचौं मन्त्र

पाँचौं मन्त्रमा चौथो मन्त्रद्वारा प्रकाश पारिएको परमात्माको विशेषताका बारेमा नै प्रकारान्तरले प्रतिपादन गरिएको छ ।

**तदेजति तन्नैजति तद्दूरे तद्वदन्तिके**
**तदन्तरस्थ सर्वस्य तदु सर्वस्थास्य बाह्यतः ॥५॥**

## सरल अर्थ

परमात्मा हिंडडुल गर्ने चल पनि हुनुहुन्छ । उहाँ हिंडडुल नगर्ने अचल पनि हुनुहुन्छ । उहाँ परभन्दा पर र त्यसै गरी वरभन्दा वर पनि हुनुहुन्छ । यस सम्पूर्ण सृष्टिभन्दा वाहिर पनि उहाँ नै हुनुहुन्छ ।

## तात्पर्य

गतिशील पनि र अचल पनि हुनु, पर पनि र वर पनि हुनु, भित्र पनि र बाहिर पनि हुनु यी परस्पर विरुद्ध लक्षणहरू हुन । परन्तु भगवान् असङ्ख्य विरुद्ध लक्षणहरूका एकै समयमा आश्रय रहन सक्नुहुन्छ । भौतिक जगत्मा जो टाढा हुन्छ त्यो नगिच हुँदैन, जो नगिच हुन्छ त्यो टाढा हुँदैन । जो भित्र हुन्छ त्यो बाहिर हुँदैन, जो बाहिर हुन्छ त्यो भित्र हुँदैन । तर परमात्मा एकै समयमा यी सबै विशेषताहरू रहन्छन् । भगवान् अनन्तशक्तिका केन्द्र हुनुहुन्छ । उहाँ सबै कुरा देख्नुहुन्छ, सुन्नुहुन्छ, जान्नुहुन्छ । सबै कालमा हुनुहुन्छ, सबै ठाउँमा हुनुहुन्छ । यसरी परमात्माको अनुभूति नहोउन्जेल मानिसले आत्मविकासको द्वार नै फेला पार्न सकिरहेको हुँदैन । सबैका हितैषी, सबैका आश्रय, सबैका बन्धु सर्वेश्वरसवा

प्रभुप्रति प्रेम र आस्था विकसित भएपछि नै जीवात्माको सही ढङ्गबाट आत्मविकासको ढोका खुलिरहेको हुन्छ ।

मेरो जीवन समाजका लागि कल्याणकारी बन्न सकोस् भन्ने भाव हृदयमा जागृत हुनु परमात्माप्रतिका प्रेमको उदय भएपछि मात्र सम्भव हुन्छ । नत्र व्यक्तिगत स्वार्थले, ममत्व र मोहले अन्धकारमय आवरण खडा गरेर मानिसका आँखा छोपिरहेको हुन्छ । सबैका परमाश्रय प्रभुको भावना जसका जीवनमा विकसित भयो उसको जीवनमा सेवा भावनाको पावन धारा प्रवाहित हुन्छ । आफूसँगै बाँचिरहेका, आफूभन्दा पछि परेका असङ्ख्य प्राणीहरू त्यस्ता साधकका लागि स्वयं परमात्माका प्रतिनिधि बनेर देखापर्दछन् । तिनको सेवामा उसलाई साक्षात सर्वेश्वरको सेवा अनुभव हुन्छ । विपत्तिमा परेका जीवहरू उसका लागि स्वयं शिव नै प्रतीत भइरहेका हुन्छन् । जीवको सेवा नै शिवको सेवा बनिरहेको हुन्छ । यो सौभाग्य तिनैलाई प्राप्त हुन्छ जसमा परमात्माप्रति प्रेम छ, भक्ति छ, भावना छ ।

यस मन्त्रमा परमात्माका जुन विशेषताहरू बताइएका छन् । तीसँग साधनाका स्तरको ठूलो सम्बन्ध छ । भगवान् निर्गुण रूपमा हुनुहुन्छ सगुण रूपमा पनि । निर्गुण रूपमा निश्चल, निर्विकल्प ब्रह्म बनेर विराजमान रहने परमात्मा नै सगुण रूपमा प्रेमी भक्तहरूको आकाङ्क्षा अनुरूप प्रेमविग्रह धारण गरेर दर्शन दिन आउनुहुन्छ । भक्तको कार्य सम्पन्न गर्न चल रूपले विचरण गर्नुहुन्छ । साधनाहीन मलिन हृदय हुनेहरूका लागि परमात्मा सधैं टाढा हुनुहुन्छ । तर साधनासम्पन्न निर्मल हृदय हुनेहरूका लागि उहाँ अति नगिच हुनुहुन्छ । सधैं सुलभ हुनुहुन्छ । भगवान् भगवद्गीतामा भन्नुहुन्छ- जो मलाई सर्वत्र देख्दछ, र सबै वस्तुलाई

मैमा अनुभव गर्दछ, त्यसका लागि म कहिल्यै दुर्लभ हुन्न र मेरो लागि त्यो कहिल्यै टाढा हुँदैन ।

**यो मां पश्यति सर्व सर्वं च मयि पश्यति**
**तस्याहं न प्रणश्यामि स च मे न प्रणश्यति ॥**

जसको मनमा शुभेच्छा जाग्दछ मेरो जीवनमा आत्मविकासको बिहानी आओस् भनेर उसले विश्वपिता परमात्माप्रति आस्थाको विकास गर्नु आवश्यक मात्र होइन अनिवार्य नै छ । अन्तरङ्ग शक्ति, बहिरङ्ग शक्ति र तटस्थ शक्ति गरी तीन थरी शक्तिको विकासद्वारा परमात्माले यस विशाल सृष्टिको संरचना र सञ्चालन गर्नुभएको छ । हामी सबै त्यसैभित्र जीवन गुजारिरहेका हुन्छौं । यसरी विचार गर्दा हाम्रो दायाँ, बायाँ, बाहिर, भित्र, वरपर सर्वत्र जताततै परमात्माकै अनन्त शक्तिको विस्तार क्रियाशील छ । यसै तथ्यतिर पाँचौं मन्त्रले अन्तर्दृष्टि जागृत गरेको छ ।

# छैटौं मन्त्र

चौथो र पाँचौं मन्त्रहरूमा परमात्माको विशेषताबारे प्रकाश पारियो । छैटौं मन्त्रमा त्यस्ता परमात्मालाई यथार्थ रूपले जान्ने महात्मा, सन्त, सन्तपुरूषका बारेमा बताइएको छ ।

**यस्तु सर्वाणि भूतान्यात्मन्येवानुपश्यति**

**सर्वभूतेषु चात्मनं ततो न विजुगुप्सते ॥ ६॥**

## सरल अर्थ

जो मानिस सम्पूर्ण प्राणीहरूलाई परमात्मामा नै देख्दछ र सम्पूर्ण प्राणीहरूमा परमात्मालाई नै देख्दछ, त्यस्तो मानिसले त्यसरी सबैमा परमात्मालाई र परमात्मामा सबैलाई देख्ने हुनाले कसैप्रति घृणा गर्दैन र पराई पनि मान्दैन ।

## तात्पर्य

परमात्माको उपासनाका स्तरहरू हुन्छन् । उच्चतम स्तरको उपासना, मध्यम स्तरको उपासना र निम्न स्तरको उपासना । जहाँ उपासना केवल मूर्ति, मठ-मन्दिर र अन्य स्थूल प्रतीकहरूमा सीमित हुन्छ, जहाँ आकृतिविशेष, मूर्तिविशेष र स्थूल प्रतीकविशेषमा गरिएको पूजापछि उपासना पूरा भएको मानिन्छ त्यो प्राकृत अथवा निम्न कोटिको उपासना हो । केवल पूजाकोठामै उपासना सीमित हुन्छ, बाहिर निष्कनासाथ सङ्कीर्णताले घेर्दछ, न भगवद्भक्तहरू न अन्य प्राणीहरू कसैप्रति सेवा छैन, सहानुभूति छैन, करूणा छैन,

त्यो निम्न कोटिको, तल्लो स्तरको उपासना हुन्छ । भागवतको भाषामा यस्तो भक्तलाई प्राकृत भक्त भनिएको छ –

**अर्चाया मेवहरये पूजां यः श्रद्धयेहते**
**न तद्भक्तेषु चान्येषु स भक्तः प्राकृतः स्मृतः॥**

श्रीमद्भागवत ११।२।४७

जो भगवान्मा प्रेम राख्दछ, भगवद्भक्तहरूसँग आत्मीयतासाथ मैत्रीको भाव राख्दछ, अबुझहरू, अज्ञानीहरूमा कृपाको भाव राख्दछ र भगवान् तथा भगवद्भक्तहरूमा द्वेष राख्नेहरू र आफ्नै पनि अहित चिताउनेहरू प्रति उपेक्षाको दृष्टिले हेर्दछ, त्यस्तो उपासक मध्यम कोटिको हुन्छ ।

**ईश्वरे तदधीनेषु वालिशेषु द्विषत्सु च**
**प्रेममैत्रीकृपोपेक्षा यः करोति स मध्यमः ॥**

श्रीमद्भागवत ११।२॥४६

अब उत्तम कोटिका उपासकहरू कस्ता हुन्छन् त्यसबारे विचार गरौं । उच्च कोटिका, प्रथम कोटिका उपासकहरू सम्पूर्ण प्राणीहरूलाई सर्वात्मा भगवान्मै देख्दछन् । त्यस्तालाई उत्तम भागवत भन्दछन्, उच्च कोटिका उपासक भन्दछन् –

**सर्वभूतेषु यः पश्येद्भगवद्भावमात्मनः॥**
**भूतानि भगवत्यात्मन्येष भागवतोत्तमः॥**

श्रीमद्भागवत ११।२।४५

यस्ता साधकहरूका निम्ति सम्पूर्ण प्राणीहरू भगवद्रूप हुन्छन् । उनीहरू घृणा होइन सेवा र सहानुभूति राख्दछन् । द्वेष होइन प्रेम र सद्भावना राख्दछन् । दीनदुखीहरूको सेवा नै

उनीहरूका निम्ति भगवत्सेवा हुन्छ । यस मन्त्रमा सर्वात्मभावबाट संस्कारित प्राणीमात्रमा समभाव वर्तिने महाभागवतको परिचय दिइएको छ ।

एउटा सच्चा सन्तको उदाहरण यहाँ सम्झौं । सन्त एकनाथ गङ्गोत्रीबाट जल लिएर दक्षिण भारतको रामेश्वर मन्दिरमा भगवान्लाई जल चढाउने शुभ सङ्कल्पले अघि बढ्दै हुनुहुन्थ्यो । प्रयाग नगिचको एउटा बगरको बालुवामा प्रचण्ड गर्मीले गर्दा प्यासले छटपटाइरहेको एउटा गधालाई उहाँले देख्नुभयो । सन्त एकनाथको कोमल हृदयले त्यस प्यासा प्राणीको अन्तर्मनको पुकारमा भगवान् श्री रामेश्वरकै पुकार अनुभव भयो । उहाँ जल लिएर त्यस दुःखी प्राणीको प्यास मेटाउन अघि सर्नुभयो । सँगैका तीर्थयात्रीहरूले आश्चर्य प्रकट गर्दै भने– 'सन्तजी कहाँ भगवान्लाई अर्पण गर्न ल्याएको तीर्थजल कहाँ यो नीच प्राणी गधा । यसरी तीर्थजल खेर फाल्नु उचित होला र !' सन्त एकनाथले भन्नुभयो– 'भाइ हो ! आत्माका रूपमा सम्पूर्ण प्राणीमा प्रभुको निवास हुन्छ । सर्वात्मा प्रभुलाई सेवा पुऱ्याउन चाहने मानिसले करुणा सेवा र सहानुभूतिलाई नै प्रभुको भक्ति मान्न सक्नुपर्दछ । मैले सोचें– गधाको यस आर्त पुकारको समाधान गरिदिएर जुन जल बाँकी रहला त्यो अझ पवित्र जल हुनेछ । त्यसैबाट रामेश्वर प्रभुको अभिषेक गरूँला ।'

सन्तको हृदयदेखि व्यक्त भएको विचार सुनेर सबैको चित्त बुझ्यो । दुःखी प्राणीको दुःखनिवारणबाट सबैको मनमा सन्तोषको अनुभव भइरहेको थियो । उनीहरूले द्विगुणित उत्साहले बाँकी तीर्थयात्रा पूरा गरेर श्री रामेश्वरको मन्दिरमा गई भगवान्लाई जल

चढाए । दीनदुःखीको सेवा नै प्रभुसेवाको सर्वोपरि साधन हो भन्ने सत्शिक्षा उनीहरूलाई सन्त एकनाथको प्रेरणाले प्राप्त भयो ।

सेवाभावना सञ्जीवनी हो । हिन्दू धर्मसंस्कृतिमा नवजीवन ल्याउन सेवासञ्जीवनीको संस्पर्श यसमा हुनु अत्यावश्यक छ । जबदेखि सेवाभावप्रति हिन्दूसमाजमा विमुखता आयो तबदेखि नै यसमा शिथिलता आउन सुरु भएको पाइन्छ । हामी समाजका असङ्ख्य पछि परिरहेका प्राणीहरूप्रति घृणाको भाव राखेर परमात्माको सेवा गर्न सक्तैनौं । जब घृणा, द्वेष र पृथकताको भावबाट माथि उठेर सद्भावना, सेवा र करुणाबाट अनुप्राणित हुन सफल हुन्छौं अनि परमात्माको द्वारमा पुग्छौं ।

यसरी छैटौं मन्त्रमा सम्पूर्ण प्राणीहरूलाई परमात्माकै रूपमा देख्ने साधक घृणा, द्वेष जस्ता मनोवृत्तिहरूबाट माथि पुग्ने कुरा बताइयो । मन्त्रको अर्थ गर्दा आत्मन्येवको अर्थ आफैँमा भन्ने गर्ने पनि टीकाकारहरू छन् । विशेष गरी अद्वैत दर्शनअनुसार आत्माको अर्थ यस प्रकार हुन्छ– 'जसले आफैँमा सम्पूर्ण प्राणीहरूलाई देख्दछ ।' वास्तवमा यथार्थ रूपमा हेर्दा जसले आफूलाई चिन्दछ त्यसैले संस्कारलाई चिन्न सक्दछ । किनभने आफूभित्र जेजस्ता मूल इच्छा र आकाङ्क्षा अन्तर्निहित हुन्छन्, त्यस्तै नै मूल इच्छा र आकाङ्क्षाहरू पनि हुन्छन् । आफूलाई अनुकूल कुरा मन पर्छ प्रतिकूल कुरा मन पर्दैन । सबै प्राणीमा यो समान रूपले लागू हुन्छ । सबै नै प्रतिकुलबाट पर हुन चाहन्छन् : अनुकूललाई आफ्नो बनाउन चाहन्छन् । दुःख सबैलाई अप्रिय हुन्छ । सुखका सबै इच्छुक हुन्छन् । यसरी दुःख-सुखप्रति सबैको संवेदनशीलता समान रूपले रहन्छ भन्ने सत्यको अनुभव भएपछि मानिस कसैप्रति घृणा नगर्ने, द्वेष नगर्ने समदर्शी हुन्छ । अरूलाई दुःख दिने काम ऊ

कहिल्यै गर्दैन । किनभने आफूलाई हुने संवेदना जस्तै अरूलाई पनि हुन्छ भन्ने उसले बुझेको हुन्छ । 'ततो न विजुगुप्सते' भन्ने वाक्यले धेरै गम्भीर कुरातिर इसारा गरेको छ । त्यस्तो समदर्शी बनिसकेको साधक आकृतिगत, वर्गगत, जातिगत कुनै पनि आधारमा घृणामूलक सोचाइ राख्दैन । प्राणीमात्रमा समभाव राखेर सद्भावना, सेवा सहानुभूति र करुणा जस्ता उच्च भावनात्मक मूल्यहरूद्वारा ऊ परिचालित हुन्छ । अरूको सुखदुख नै उसको आफ्नो सुखदुःख हुन्छ ।

एक जना सन्त कुनै गाउँको बाटो गरी कतै गइरहेका थिए । सन्तको आगमनमा गाउँलेहरूलाई असाधारण खुसी भइरहेको थियो । उत्साहसाथ गाउँलेहरूले उनको स्वागत गरे । उनको समक्ष जिज्ञासा राखियो । गाउँलेहरूको जिज्ञासा थियो– 'सन्तजी ! सुख सबैलाई चाहिएको छ । तर कसैलाई प्राप्त चाहिं हुँदैन । किन ?' सन्तले जवाफ दिए– 'मानिसले सुखको बाटो नै बिराएको छ । आफूमात्र सुखी हुँ भन्ने धारणाले मानिसलाई साँचो सुखको द्वारमा पुग्न दिँदैन । किनभने मानवको आफ्नो प्रकृतिअनुसारको धारणा त्यो होइन । ईश्वर सबैका हितैषी छन् । मानिस पनि उनै परमपिता परमात्माको अंश भएकाले सबैप्रति हितचिन्तन गर्नु उसको प्रकृतिप्राप्त गुण हो । तर त्यसका विरुद्ध मानिस आफूमात्र सुखी बन्ने सङ्कीर्ण लालसा लिएर हिंडिरहेको हुन्छ । यस प्रकारको लालसाले उसलाई सुखी बन्न दिँदैन । साधनसम्पन्न ऊ होला त्यो अर्कै कुरो हो । तर साधनहरूको आधारमा सुख हुँदैन । सुख त आन्तरिक कुरा हो । त्यो आत्मविकाससँगै विकसित हुने एउटा अन्तवृत्त हो । बाह्य साधनको भरमा सुखको आशा गर्नु आशा मात्र

हुन्छ । सेवा, सद्भावना, सहानुभूति जस्ता आन्तरिक सद्गुणहरूको विकास नभई मानिसले सुखको बाटोमा लाग्नै जानेको हुँदैन ।'

गाउँलेहरू तन्मय भएर सुनिरहेका थिए । महात्माले प्रसङ्गको उपसंहार गर्दै भने - 'भाइ हो !

**ग्रन्थ पन्थ सव जगतके वात बतावत दोय**
**दुःख दीने दुःख होत है सुख दीने सुख होय ॥**

अर्थात् संसारका सबै सत्शास्त्रहरूले, सबै साधनामार्गहरूले दुई कुरा भनेका छन् यदि दुःख चाहिएको हो भने अरूलाई दुःख दिनुपर्दछ, सुखको अपेक्षा हो भने अरूलाई सुख पुऱ्याउनुपर्दछ । अरूलाई सुख दिनेले सुख पाउँछ, अरूलाई सताउने गरियो भने दुःखको बीउ रोप्ने काम हुन्छ । जहाँ घृणा र विद्वेषको वृत्तिबाट मानिस माथि उठिरहेको हुन्छ, त्यहाँ परपीडनको सम्पूर्ण मनोवृत्ति नै हट्दछ । मानिसमा परहित चिन्तनको शुभभावना प्रबल भएर आइरहेको हुन्छ । अनि आन्तरिक सन्तोष बढ्दै जान्छ, जीवनमा केही गर्न पाइयो भनेर मनमा विलक्षण प्रसन्नताको उदय हुन्छ । यसैबाट मानिसलाई सुखको द्वारमा पुग्ने बाटो मिल्दछ । आफैंमा सीमित रहने सुखसयलले मानिसलाई कहिल्यै पनि स्थायी सुख दिन सक्दैन । तर जब अरूको भलाइ हुने कार्य मानिसबाट हुन्छ अनिमात्र उसको जीवनको सही कर्तव्यको शुभारम्भ हुन्छ र मानिसलाई स्थायी सुखको बाटो मिल्दछ । सन्तको सदुपदेशले गाउँलेहरूलाई ज्ञानको उज्यालो मिलिरहेको थियो ।

'ततो न विजुगुप्सते' सबमा आफैंलाई र आफैंमा सबैलाई देख्न सक्ने आध्यात्मिक अनुभूतिमा पुगेपछि मानिस भेदभावबाट माथि उठ्दछ । ऊ बुझ्दछ - सबैमा महत्त्वाकाङ्क्षा हुन्छ ।

आत्मसम्मानमा आघात पर्दा आफूलाई दुःख अनुभव भएझैं सबैलाई दुःख अनुभव हुन्छ । पुरुषलाई पनि हुन्छ, स्त्रीलाई पनि हुन्छ । ठूलो जातकालाई पनि साना जातकालाई पनि हुन्छ । जीवनका मूलभूत कुराहरूमा सबैको बनोट एकै प्रकारको हुन्छ । त्यसैले सम्मानपूर्ण जीवन जिउने, सुखपूर्वक बाँच्ने आकाङ्क्षाहरू सबैमा बराबर हुन्छन् । यस सत्यको अनुभव नगरी मानिस सामाजिक प्राणीको तहमा पुगेर आफ्नो गरिमामय जीवनस्तरलाई प्राप्त गर्न सकिरहेको हुँदैन । वास्तवमा शुद्ध चित्तले भगवान्को उपासना गर्न सकेमा, सच्चरित्र बन्न सकेमा, सामाजिक हितका लागि सेवा पुऱ्याउन सकेमा महान् बन्न नसक्ने मानिस कुनै हुँदैन । भिल्लजातका सामान्य महिला आध्यात्मिक जगत्कै निम्ति प्रेरणादायी भक्तिमती साध्वी शबरी बन्न सक्तछिन् । सार्की कुलका सामान्य पुरुष प्रेरक भक्तिसाहित्यका स्रष्टा सन्त रैदास बन्न सक्तछन् । आध्यात्मिक समुन्नतिको पथमा अग्रसर बन्न सकेमा घृणा र भेदभावका सम्पूर्ण पर्खाल तोडेर मानिसमा आत्मविकासको अलौकिक स्वर्णिम आलोक प्रविष्ट हुन्छ ।

# सातौं मन्त्र

सातौं मन्त्रमा सबैमा प्रभु श्रीहरिको दर्शन गर्दै आफ्नै आत्माको अनुभूति गरेर समताको अनुभूतिमा पुग्न सकेमा जुन स्थिति प्राप्त हुन्छ त्यसबारे बताइएको छ ।

**यस्मिन् सर्वाणि भूतान्यात्मैवाभूद्विजानतः**
**तत्र को मोहः कः शोक एकत्वमनुपश्यतः ॥७॥**

सन् २००० मा संयुक्त राष्ट्रसंघको आव्हानमा न्यूयोर्कमा आयोजित विश्वभरिका धार्मिक तथा आध्यात्मिक नेताहरूको सहस्राब्दी विश्वशान्ति सम्मेलनको सभामा यसै पावन मन्त्रको सामूहिक उच्चारणसँगै एकै स्वरले प्रस्तुत गरिएको प्रार्थना यसप्रकार थियो - The world is one. The world is one on one surface we .......

## सरल अर्थ

जुन अवस्थामा परमात्माको व्यापक स्वरूपलाई यथार्थ रूपले जानिसकेको साधकका लागि सम्पूर्ण प्राणीहरू परमात्ममय बनिरहेका हुन्छन्, त्यो अवस्थामा प्राणीमात्रमा एउटै परमात्माको अनुभूति गर्ने साधकका लागि केको शोक र मोह हुन्थ्यो र ?

## तात्पर्य

एकत्वको दृष्टिले एउटै परमात्मसत्ताको सर्वत्र अनुभूति गर्ने प्रेरणा यस पावन मन्त्रले दिएको छ । साथै आफ्नो आत्माकै रूपमा प्राणीमात्रका आत्मालाई देख्ने उच्चतम स्थितितिर्फ अघि बढ्न यसले प्रेरित गरेको छ । यसरी सर्वत्र एकत्वको अनुभव गर्ने मानिस शोक र मोहबाट माथि उठ्दछ ।

जीवलाई शिवमा पुग्नबाट रोक्ने तीनवटा दोष छन् । ती हुन्- मल, विक्षेप र आवरण । तीमध्ये विक्षेप र आवरणको निवारणतर्फ यस मन्त्रमा विशेष जोड दिइएको छ । मोह आवरण हो र शोक विक्षेप हो । जब मोह हुन्छ दृष्टिशक्तिमा आवरण लाग्दछ । मानिस देख्नुपर्ने कुरा देख्न नसक्ने र बुझ्नुपर्ने कुरा बुझ्न नसक्ने हुन्छ । शोक भनेको मनमा पर्ने आघात हो । यो दुःखकै अर्को रूप हो यसले मानिसलाई विचलित तुल्याउँछ । त्यसैले यो विक्षेप रूप हो । मल चाहीं ईश्वरप्रति ध्यानै नदिई फलासक्तिमा जेलिएर कर्म गर्दा लाग्ने आसक्तिको अवलेप हो । ईश्वरार्पण बुद्धिले निष्कामतासाथ शुभ कर्म गरेर मलको निवारण गर्न सकिन्छ । भगवद्रउपासनाले विक्षेपको र आत्मानुभूतिले आवरणको निवारण हुने हुनाले सातौं मन्त्रमा परमात्माको व्यापक स्वरूपको बोध र आत्मानुभूति दुवैको माध्यमबाट विक्षेप आवरणका प्रतीक शोक र मोहको निराकरणमा बल दिइएको छ ।

एकत्वको अनुभूतिबारे यस पवित्र मन्त्रमा जोड दिइएको छ । एकत्वको अनभूति कसरी गर्ने ? यसबारेमा अत्यन्त मननीय आध्यात्मिक शिक्षा यहाँ दिइएको छ ।

बाहिरबाट हेर्दा सर्वत्र अनेकता देखिन्छ । विभिन्न वर्ण छन् । विभिन्न जात छन् । विभिन्न आकृति छन् । विभिन्न प्रकृति छन् । विभिन्न नाम छन् । विभिन्न रूप छन् । कहीँ एकत्व देखिँदैन । सर्वत्र अनेकत्व छ । परन्तु हामी भित्र पसेर हेरौं । प्राणीमात्रमा शारीरिक आवश्यकताहरू समान छन् । सबैलाई गाँस चाहिन्छ, वास चाहिन्छ अझ भित्र पसेर हेर्‍यो भने तीन कुरामा सबै समान देखिन्छन् । ती तीन कुरा हुन् । 'मृत्युबाट बच्ने इच्छा ज्ञान प्राप्त गर्ने इच्छा र सुखी बन्ने इच्छा । आत्मा सच्चिदानन्दघन

परमात्माको अंश भएको हुनाले सत्, चित् र आनन्दको अभिव्यक्ति उसको आकाङ्क्षाबाट सधैं भइरहेको हुन्छ । म सधैं बाचिरहूँ मृत्युको मुखमा मैले पर्नु नपरोस् भन्ने चाहनाभित्र सत्को अभिव्यक्ति छ । प्रत्येक प्राणी सत्को यही लालसा बोकेर बाँचिरहेको हुन्छ । संसारमा कुनै मानिस यस्तो हुँदैन जो आफूलाई अज्ञानी बनेको देख्न चाहोस् । जति नै अनपढ किन नहोस्, जति नै निरक्षर किन नहोस् पढाइपट्टिको कुरा झिकेर भए पनि आफू जानकार भएको कुरा प्रमाणित गर्न मानिस प्रयास गर्छ । तात्पर्य ज्ञानको सधैं भोको छ मानव । यो ज्ञानको भोक चित्तत्वको प्रतीक हो । संसारमा कोही पनि यस्तो पाइँदैन जसलाई दुःख प्यारो लागोस् । सबै चाहन्छन् सुखी होऊँ । प्रत्येक कर्मको प्रेरक कारण सुखप्राप्ति हो । प्रत्येक मानिस आफ्नो काम गर्ने प्रवृत्तिको पछाडि सुखको प्राप्तिलाई नै कारणका रूपमा स्वीकार्दछ । दुःखबाट बच्नु र सुख प्राप्त गर्नु मानवमात्रको मूल लक्ष्य हो । यो आनन्दतत्त्वको द्योतक हो । यसरी मृत्युबाट बच्ने, अज्ञानताबाट बच्ने र दुःखबाट छुटकारा पाउने लालसा मानवमात्रमा सधैं समान रूपले विद्यमान रहन्छ । भित्रबाट यसरी हामी एकत्व भेट्तछौं । आफूमा जे छ । त्यही सबैमा छ । त्यसैले जसले आफैंमा सबैलाई देख्यो त्यसमा एकत्वको बोध हुन्छ र ऊ शोकबाट मुक्त हुन्छ । मोक्षबाट पारि पुग्दछ । एकत्वको यो अमोघ दृष्टिलाई आज समाजका प्रत्येक तहमा पुऱ्याउनु आवश्यक भएको छ । अनि व्यक्ति-व्यक्तिमा नवचेतना जागृत हुन्छ, अरूको सेवा भन्नु आफ्नै सेवा रहेछ भन्ने तात्त्विक रूपमा भावनात्मक जागरण आएपछिमात्र साँचो अर्थमा सेवा भावनाको विकास हुन्छ र मानिसले जीवनको पूर्णताको स्थिति फेला पार्न सक्दछ ।

# आठौं मन्त्र

आठौं मन्त्रको विषय अझ मार्मिक छ । यस मन्त्रमा छैटौं र सातौं मन्त्रमा बताइएअनुसार सबै प्राणीहरूलाई आफैंमा र आफूलाई सबै प्राणीमा देख्ने र सबै प्राणीमा प्रभुको निवास छ भन्ने निर्मल, निश्छल आस्था हुने महान् साधकले परमेश्वरलाई प्राप्त गर्ने तथ्यमा प्रकाश पार्दै परमात्माको कल्याणकारी स्वरूपको परिचय प्रदान गरिएको छ ।

**सपर्यगाच्छुक्रमकायमब्रणमस्नाविरं शुद्धमपापविद्धम ।**

**कविर्मनीषि परिभूः स्वयम्भूर्याथातथ्यतोऽर्थान् व्यदधाछश्वतीम्यः समाभ्यः ॥८॥**

**सरल अर्थ**

त्यस्ता प्राणीमात्रमा समदर्शन गर्ने उत्तम साधकले परम तेजोमय, सर्वशक्तिमान्, जडदेहले रहित, सम्पूर्ण रूपमा निर्दोष स्नायु, रक्त आदि स्थूल अवयव नभएका सदा निर्मल, सदा शुद्ध, सर्वदा पापमुक्त भगवान्‌लाई प्राप्त गर्दछन् । परमात्मालाई, प्रभुलाई, भगवान्‌लाई जान्ने यस्ता साधकलाई अनुभव हुन्छ- प्रभु क्रान्तदर्शी हुनुहुन्छ । गत, आगत र अनागत, भूत, वर्तमान र भविष्य सबै कालको ज्ञाता हुनुहुन्छ । भगवान्‌को रचनाकौशल पनि विलक्षण छ, अनन्त, त्यसैले उहाँ सबैलाई आफ्नो लोकोत्तर प्रभावबाट प्रभावित तुल्याउनुहुन्छ । परमेश्वर स्वयम्भू हुनुहुन्छ । सम्पूर्ण कारणका पनि कारण स्वयं प्रकाश हुनुहुन्छ । यस्ता परमेश्वरले अनादिकालदेखि प्रकृति र गुणको तारतम्यलाई यथायोग्य रूपले व्यवस्थित गर्दै सृष्टिका पदार्थहरूको सिर्जना र व्यवस्थापन गर्नुहुन्छ ।

## तात्पर्य

यस मन्त्रमा भगवान्का विलक्षण गुणहरूको चर्चा गरेर जीवात्मालाई तिनको सधैं अनुशीलन गर्ने र भगवान्कै अंश हुनाले आफूमा पनि तिनको विकास गर्ने सत्प्रेरणा प्रदान गरिएको छ । भगवान् परम तेजोमय हुनुहुन्छ । जीवात्माले पनि शुभ कर्महरू गरेर आत्मबल सम्पन्न भई तेजस्वी बन्नुपर्दछ । 'तेजः' लाई गीताले दैवी सम्पत्तिमा गणना गरेको छ । परमात्मा प्राकृत देहरहित हुनुहुन्छ । भक्तहरूको आकाङ्क्षा पूरा गरिदिन भगवान्ले धारण गर्नुहुने विग्रह पनि भौतिक हुँदैन । दिव्य, अप्राकृत र सच्चिदानन्दमय हुन्छ । भगवान्का लीला विग्रहहरूको संस्मरण गरेर जीवात्मा अनन्त कल्याणको भागी हुन्छ । म त जड शरीर हैन, भगवंदशस्वरूप सच्चिदानन्दघन आत्मा हूँ । आज होस् अथवा भोलि, इच्छाले होस् अथवा अनिच्छाले जड देहसित मेरो सम्बन्धविच्छेद निश्चित छ । त्यसैले यसको आसक्तिमा, यसको सेवा शुषूपामा नै हराएर आफ्नो भावी कल्याणमा आँच आउन दिनुहुन्न भन्ने साधकले सम्झिन सकेमा उसको पारमार्थिक कल्याण हुन्छ ।

भगवान् दोषरहित हुनुहुन्छ । सम्पूर्ण रूपमा विश्वकल्याणकारी सद्गुणहरूको निकेतन भगवान् हुनुहुन्छ । त्यसैले प्रतितहरूका पावन हुनुहन्छ । पतितपावन प्रभुको साधना गरेर जीवात्मा पनि पतितबाट पावन बन्न सक्दछ । जुनसुकै कुलको होस्, जुनसुकै वर्णको वा रङ्गको होस् आत्मचेतनाको विकास गरेर ऊ माथि उठ्न सक्दछ । महामानव बन्न सक्दछ । भगवद्भक्तिको आश्रयबाट पावन बन्न नसक्ने प्राणी सृष्टिमा पैदा भएकै हुँदैन । भगवान् शुद्ध र पापमुक्त हुनुहुन्छ । अच्युत हुनुहुन्छ । भक्तलाई पनि

अच्युत बनाइदिनुहुन्छ । जीवात्माले प्रभुका यी पावन गुणहरूको निरन्तर सम्झना गरिरहेमा स्वयं पवित्र बनेर अरूलाई पनि पवित्रतातिर उत्प्रेरित गर्न सक्दछ । वास्तवमा जिउनुको पूर्ण आनन्द यसैमा छ ।

भगवान् कवि हुनुहुन्छ । यो सम्पूर्ण सृष्टिरचना उहाँको रसमय काव्यरचना हो । श्रुति भन्दछ– 'पश्य देवश्य काव्यम्, न ममार न जीर्यति ।' हेर त ती दिव्य पुरुषको काव्यरचनास्वरूप यो सृष्टि कति रमणीय छ । न त यो कहिल्यै सकिन्छ न त जीर्ण नै हुन्छ । नित्य विद्यमान, नित्य नूतन । कति मिठासपूर्ण काव्य परमात्माले रचेका छन् । कविमा क्रान्तदर्शी दृष्टि हुन्छ । सरस्वतीको परम तत्त्व नै रचनाशिल्पी कवि र रचनाका पारखी सहृदय हुन् । यी सबै धन्य छन् । 'सरस्वत्यास्त कविसहृदयस्य विजयते ।' भगवान् त अनन्त भावी सृष्टिरचनाको आकलन अहिले नै गर्न सक्नुहुन्छ । त्यसैले उहाँ कवि मात्र होइन, परकवि हुनुहुन्छ । बुद्धिले, बलले, गतिले, सबै कुराको पूर्णतम हुनुहुन्छ । सर्वोपरि हुनुहुन्छ, उहाँको कृपाप्रसादको सानो अंश पाउनेहरू संसारमा बुद्धिमान्, बलवान्, गतिमान बनेर जीवन सफल तुल्याउँछन् । उहाँको परिचयका लागि कुनै बाहिरी प्रमाण चाहिंदैन । उहाँ स्वयं प्रकाश हुनुहुन्छ । उहाँको कारण कोही छैन । तर उहाँ सबैका कारण हुनुहुन्छ । सृष्टिको बिहानीदेखि आजसम्म आवश्यक समयमा आवश्यक उपकरण जुटाएर आवश्यक कार्य सञ्चालन गरेर ठीक-ठीक रूपमा सृष्टिका पदार्थहरूको व्यवस्था मिलाउनुभएको छ । समयमा ऋतु परिवर्तन हुन्छ, समयमा दिन र रात आउँछन्-जान्छन् । जसले जस्तो साधना गर्‍यो त्यस्तै सफलता पाइरहेको हुन्छ । काव्यमा प्रसङ्गअनुसारका सर्ग र अध्याय

आए जस्तै परमात्माको यो सुन्दर काव्यरचनारूप सिर्जनामा पनि सबै कुरा अनादिकालदेखि यथास्थिति अविरल गतिले चलिरहेका छन् ।

भगवान् सबैमा हुनुहुन्छ, सबैका हुनुहुन्छ । हामी उहाँका हौं उहाँ हाम्रा हुनुहुन्छ । जसले जुन भावमा उपासना गऱ्यो त्यस्तै भावबाट उहाँको कृपाप्रसाद पाउँछ । परमात्माप्रतिको कृतज्ञ भावना र सेवा जीवात्माको सर्वोपरि कर्तव्य हो । यसैको बोध गराउन यहाँ यस मन्त्रमा भगवान्का कल्याणकारी गुणहरूको चर्चा गरिएको छ । प्राणीमात्रमा आफैं समान व्यवहार गर्नेहरूले नै प्रभुलाई सेवा पुऱ्याउन सक्दछन् र तिनैलाई प्रभुको प्राप्ति पनि हुन्छ भन्ने समेत कुरा 'सगर्यमात्' भनेर यस मन्त्रमा स्पष्ट सङ्केत गरिएको छ ।

# नवौं मन्त्र

अब नवौं मन्त्रमा विद्या र अविद्याको अवलम्बन गर्दा पाइने भिन्नभिन्नै परिणामबारे बताइन्छ ।

**अन्धं तमः प्रविशन्ति येऽविद्यामुपासते**
**ततो भूयइव ते तमो य उ विद्यायां रताः ॥९॥**

### सरल अर्थ

जो अविद्याको उपासना गर्दछन् ती अज्ञान रूप घोर अन्धकारमा पर्दछन् । जो चाहिं विद्यामा रहीकन पनि सकामतासाथ अल्झिन पुग्दछन् बन्धनमा पर्दछन्: अनि जो चाहिं विद्यामा रत रहन्छन् ती त झन् गाढा अन्धकारमा रुमलिन पुगिरहेका हुन्छन् ।

### तात्पर्य

यस मन्त्रमा आएका विद्या र अविद्या शब्दले लक्ष्य गरेको विशेष अर्थ सम्झिनु नितान्त आवश्यक छ । नत्र भ्रममा पर्न सकिन्छ । अविद्या शब्दको अर्थ त स्पष्ट छ । विभिन्न कामनाहरूमा जेलिएर आसक्तिपूर्ण तरह-तरहका भोगप्राप्ति निम्ति, आफ्नै मात्र हितको आकाङ्क्षा राखेर कर्म गर्ने प्रवृत्ति अविद्या हो । यस्तो अविद्याको उपासना गर्नेहरू घोर अन्धकारमा पर्दछन् । यसैलाई मन्त्रमा 'अन्धं तमः प्रविशन्ति येऽवि द्यामुपासते' भनेर व्यक्त गरिएको छ । यो कुरा बुझ्न गाह्रो छैन । मनुष्यको विकास आध्यात्मिक विकासविना अधुरो हुन्छ । अधुरो मात्र होइन मानिस केवल भौतिक विकासमा मात्र कुण्ठित हुन पुगेमा अनर्थकै स्थिति पनि सिर्जिरहेको हुन्छ । मानिस शरीर मात्र होइन शरीर र उसको

बाहिरी यन्त्र पनि हो । त्यो यन्त्र अस्वस्थ नबनोस् यस निम्ति अवश्य ध्यान दिनुपर्दछ । परन्तु सम्पूर्ण रूपमा शारीरिक सुखमा नै हराउनु चाहिं मानिसका लागि घोर अनर्थको कारण हुन्छ । किनभने उसले त शरीरभन्दा माथि उठेर मनमा, मनभन्दा माथि उठेर बुद्धिमा, बुद्धिभन्दा पनि माथि उठेर आत्मामा पुग्नुछ, आत्मपरिचय प्राप्त गर्नुछ, आत्माको उन्नति नै उसको उन्नति हो । शरीरिक दृष्टिले उत्तमभन्दा उत्तम सुखसुविधाको उपभोग गऱ्यो, भोली गएर आत्माको पतन भयो, मुक्तिको द्वारस्वरूप पावन मानव जीवनबाट झरेर अर्को अज्ञानमय तल्लो जीवनमा पुगियो भने त्यहाँभन्दा ठूलो अनर्थ अर्को केलाई मान्ने ? कहाँ चेतनाको सर्वोत्तम बिकासभूमि मानव जीवन, कहाँ शरीरभन्दा परको कुरा सोच्नै एकै छिन पनि अवसर नभएको पशुजीवन । त्यसैले सकाम कर्मानुष्ठान, भोगलिप्सा र त्यसैबाट प्रेरित भएर आसक्तिपूर्ण, अज्ञानमूलक कर्म गर्ने अविद्याको अन्धकारपूर्ण स्थितिबाट साधकले माथि उठ्नु आवश्यक छ । नत्र अँध्यारोमा पुगिने भयङ्कर डर रहन्छ । यही यस मन्त्रले इङ्गित गरेको छ ।

परमात्मालाई बिर्सेर परमात्माकै अंशस्वरूप सच्चिदानन्दमय आफ्नो स्वरूपलाई भुल्नु अविद्या हो । केवल स्थूल शरीरलाई आफू ठान्नु र त्यसैनिम्ति सम्पूर्ण कर्मशक्तिको उपयोग गर्नु अविद्या हो । यस्तो अविद्याको अवलम्बनबाट मानव घोर अन्धकारमा पर्दछ । सकाम अनुष्ठानहरूमा नै जेलिएर स्वर्गादि भोगनिकेतन बनेको सबै लोकको प्राप्तिमा आसक्त बन्नु पनि अविद्याकै क्षेत्रभित्र पर्ने कुरा हो ।

यस मन्त्रले विद्यामा रत रहनेले चाहिं अझ गाढा र भयावह अन्धकारमा पर्ने कुरा बताएको छ । शङ्का उठ्छ– यो के भनेको

होला ? यहाँ विद्या शब्दले शुभकर्महरूलाई अविरल रूपले सम्पन्न गर्दै उच्चतम आध्यात्मिक ज्ञान प्राप्त गर्ने मुक्तिदायिनी विद्यालाई होइन भ्रमपूर्वक अविद्या रूपमा लिइएको छ । अविद्या कोटिको धारणालाई लिइएको छ । विद्यामै लागेका छौं भनी ठान्ने तर कर्म र ज्ञानको सहगामी स्थितिलाई नबुझेका अकर्मण्य बनेर सैद्धान्तिक ज्ञानको मार्गमा लाग्दै अधूरो जीवन जिउने साधकहरूलाई लक्ष्य गरेर उनीहरूले अझ गाढा अन्धकारमा प्रवेश गर्नु पर्ने कुरा यहाँ बताइएको छ ।

मन्त्रले अत्यन्त मार्मिक र मननीय कुरा बताइको छ । मन्त्रमा 'विद्यायां रताः' भन्ने वाक्यांश प्रयोग भएको छ । विद्याको सही अर्थ नबुझेका अथवा बुझेर पनि त्यसलाई सही ढङ्गले ग्रहण गर्न नसकेका साधकलाई लक्ष्य गर्न 'रता' शब्दको प्रयोग यहाँ भएको छ । 'वेदवादरताः पार्थ नान्यदस्तीति वादिन' भनेर गीतामा यस्तै अर्थ नबुझी विद्याको बाटोमा 'रत' भएका एक थरी स्वर्गादिमा लट्ठिने साधकलाई इङ्गित गरिएको छ । बाटो त विद्याको लिएका छन् ज्ञानको अभिमान छ, तर देहाभिमानले पनि छोडेको छैन । ज्ञान प्राप्त भएपछि कर्म गर्नै पर्दैन भनेर कर्तव्य कर्मको स्वयं त्याग गर्ने र अरूलाई यस्तै गलत प्रेरणा दिने विद्याभिमानीहरूलाई यहाँ 'विद्यायां रताः' भनेर बताइएको छ । त्यस्तो मिथ्या ज्ञानाभिमानी बन्न पुगेमा मानिस सामान्य अज्ञानी मानिसले प्राप्त गर्ने अन्धकारभन्दा पनि घोर अन्धकारमा पर्न पुग्दछ ।

निष्कामतासाथ शुभकर्म गर्दै रहेर ज्ञाननिष्ठाद्वारा आफ्नो आत्माको पूर्ण परिचय पनि प्राप्त गर्न सफल भएको पूर्ण जीवन जिउने प्रेरणा यस पावन मन्त्रले प्रदान गरेको छ । अज्ञानमूलक

जडतापूर्ण कर्ममा लागेर आध्यात्मिक समुन्नतिविनाको जीवन जति हानिकारक छ, त्योभन्दा पनि बढी हानिकारक ज्ञानको अभिमानी बनेर शुभकर्मरहित जीवन जिउनु हुन्छ । कठोपनिषद्ले विद्याभिमानी बनेका तर वास्तविकतासाथ हेर्दा अविद्यामै रुमलिएका दिग्भ्रान्त साधकहरूप्रति इसारा गर्दै भनिएको छ ।

**अविद्यायामन्तरे वर्तमानाः स्वयं धीरा पण्डितं मान्यमानाः**
**दन्द्रम्यमाणाः परियन्ति मूढा अन्धे नैव नीयमाना यथान्धा ॥**

कठोपनिषद् २।५

अत्यधिक साधनाको उच्चतासँगै विकसित हुँदै जाने विद्यालाई विवेकसाथ, विनयसाथ, अनुशासन र मर्यादासाथ ग्रहण गर्नु अति आवश्यक हुन्छ । महर्षि योगवाशिष्ठ भन्नुहुन्छ– 'जसले साधना गरेको छैन, अज्ञानी छ, अलि–अलि मात्र कुरा बुझ्न लागेको छ त्यस्तालाई एकैचोटि सबै ब्रह्म हो भनिदियो भने त्यसरी अपरिपक्व अवस्थामै, असमयमा नै दुरुह कुरा बताइदिने गुरुले शिष्यप्रति घोर अनर्थ गरिरहेको हुन्छ ।'

**अज्ञस्याल्पप्रबुद्धस्य सर्ब ब्रह्ममेति यो वदेत्**
**महानिरयजालेषु स तेन विनिपातितः ॥**

त्यसैले जगत् मिथ्या हो, ज्ञानीले कर्म गर्न पर्दैन जस्ता भ्रामक कुरामा जेलिएर अरूलाई समेत जीवन विकासको स्वाभाविक सहज र रचनात्मक मार्गबाट विचलित तुल्याउने भ्रान्तविद्या–साधकहरूलाई अज्ञानीभन्दा पनि हानिकारक भनेर यस मन्त्रले बताएको छ ।

# दसौं मन्त्र

अब दसौं मन्त्रमा विद्याको र अविद्याको बाटोबाट अघि बढ्दा प्राप्त हुने भिन्दाभिन्नै फलका सम्बन्धमा अझ स्पष्ट रूपमा इङ्गित गरिएको छ ।

**अन्यदाहुर्विद्ययाअन्यदा हुरविद्यया**
**इति शुश्रुम धीराणां ये न स्तद् विचचक्षिरे ॥१०॥**

## सरल अर्थ

विद्याको बाटोबाट अघि बढ्दा अर्कै फल प्राप्त हुन्छ र अविद्याको बाटोबाट अघि बढ्दा अर्कै फल प्राप्त हुन्छ भन्ने कुरा साधनाशास्त्रहरूमा बताइएको छ । जसले हामीलाई त्यो साधनाको रहस्य कुरा बताए ती धीर व्यक्तिहरूबाट हामीले यस्तै सुनेका छौं ।

## तात्पर्य

अब यहाँ फेरि विचार गर्नुछ । विद्या भनेर केलाई लिने ? केलाई सम्झिने ? अविद्या भनेर केलाई सम्झिने र त्यसको स्वरूप कसरी चिन्ने ? भगवद्गीताको तेह्रौं अध्यायमा देखाइएका ज्ञाननिष्ठाका निम्ति निर्धारित सबै मर्यादाहरू विद्याभित्र पर्दछन् । तिनीहरूभन्दा भिन्न अज्ञानभित्र पर्ने सबै कुरा अविद्याका पोषक हुन्छन् । 'एतज्ज्ञानमिति प्रोक्तमज्ञानं दयदतोऽन्यथा' भनेर त्यहाँ विद्या र अविद्याको नै स्वरूप स्पष्ट गरिएको छ । विद्या अथवा ज्ञानको मार्गमा जान चाहनेले अनुसरण गर्नुपर्ने मर्यादाहरू अलग्गै छन् र तिनबाट प्राप्त हुने फल पनि अलग छ । के हुन् त ती मर्यादाहरू ? ती आध्यामिक एवं नैतिक मूल्यहरू यस प्रकार छन्–

पहिलो हो अमानित्व । सधैँ निरभिमान रही उत्तमोउत्तम सद्‌गुणहरूको विकास गरेर सच्चरित्र बन्नु र अरूमा रहेका सद्‌गुणहरूको सधैं सम्मान गर्नु । दोस्रो मर्यादा हो अदम्भित्व अर्थात् जीवनमा सफलता चाहनेले दम्भ अथवा देखावटीबाट सधैं बच्नुपर्दछ । असल काम गर्ने, असल बोलीवचन गर्ने तर साँचो हृदयले । अरूको नक्कल गरेर, अथवा अरूले ठूलो भनिदेलान् भनेर होइन । तेस्रो मर्यादा हो अहिंसा । अहिंसा भन्नाले मन, वचन र कर्म तीनै तहबाट कसैप्रति पनि कुनै प्रकारको अहित नगर्ने पवित्र जीवननिष्ठाको बोध हुन्छ । चौथो मर्यादा हो क्षमा अर्थात् अरूले गरेको तिरस्कार, अपमान र अहितको व्यवहारलाई सहने स्वभाव बनाउनु । पाँचौं मर्यादा हो आर्जव अर्थात् अरूप्रतिको व्यवहारमा निश्छल र निष्कपट रही सरलताको भाव राख्नु । छैटौं मर्यादा हो आध्यात्मिक साधनाको मर्म बुझ्केका योग्य आचार्य अथवा गुरूको उपासना गर्नु । सातौं मर्यादा हो शौच अर्थात् पवित्रता । वचनमा पवित्रता, व्यवहारमा पवित्रता, सबै तहमा निश्चल, निष्कपट बर्ताउ गर्नु । आठौं मर्यादा हो स्थिरता अर्थात् साधनाशास्त्रले, गुरूले बताएको आत्मानुशासनमा दृढ रहनु । नवौं अनुशासन हो समुन्नतिमा बाधा पार्ने, आध्यात्मिक प्रगतिमा अवरोध ल्याइदिने प्रतिकूल व्यवहारबाट आफूलाई सधैं बचाउनु । दसौं अनुशासन हो केवल शरीरसुखलाई नै सर्वस्व सम्झेर विषयसुखमै रमिरहने, आत्माचिन्तनतर्फ आफ्नो वास्तविक स्वरूपतर्फ सोच्नै नभ्याउने स्थितिलाई छोडदिनु । एघारौं मर्यादा हो-शरीर, धन बल आदि बाह्य वस्तुमाथि आसक्ति राखेर त्यसैमा अहङ्कार गर्ने बानी छोडी आत्मासाधनमा संलग्न रहनु । बाह्रौं मर्यादा हो संसारमा जन्मेपछि एक दिन नमरी हुँदैन, एक दिन बूढो हुनु अनिवार्य छ, शरीर भएपछि कुनै न कुनै रोगको सिकार नभई दुःख नभोगी धर

पाइँदैन भन्ने तथ्यलाई अनुभव गर्नु । तेह्रौं मर्यादा हो घर, स्त्री, पुत्रादि आफ्ना प्रिय वस्तुहरूमा तात्त्विक दृष्टि राख्नु अनि अनासक्त रहनु । चौधौं मर्यादा हो राम्रो आइलागोस् वा नराम्रो समान चित्तले रहनु । पन्ध्रौं मर्यादा हो परमात्मा कहिल्यै कुनै स्थितिमा पनि नछुट्ने अव्यभिचारिणी भक्ति राख्नु । सोह्रौं मर्यादा हो आफ्नो स्वरूपबारे ध्यान चिन्तन निम्ति प्रतिदिन एकान्तसेवन गर्नु । सत्रौं मर्यादा हो जनसमुदायबाट प्राप्त हुने मानप्रतिष्ठाप्रति निरपेक्षता राख्नु । अठारौं अनुशासन हो आध्यात्मिक ज्ञानको शाश्वत स्वरूपप्रति आस्था । उन्नाइसौं अनुशासन हो जीवनको तात्त्विक ज्ञान प्राप्ति गर्ने उत्कृष्ट भावना । यी मर्यादाहरू, मूल्यहरू र अनुशासनलाई जीवनमा कायम राखेर क्षणक्षणको र कणकणको सदुपयोग गर्दै जिउनु विद्या हो । अविद्या प्राप्त हुन सक्तैन । त्यसैले यस मन्त्रमा विद्याबाट अर्कै फल र अविद्याबाट अर्कै फल प्राप्त हुने कुरा बताइएको छ ।

आफ्नो स्वरूपप्रति जिज्ञासा नै नराखी शरीरलाई नै सर्वस्व सम्झेर । आध्यात्मिक समुत्थानप्रति कत्ति पनि रुचि नभएको जडतामा जेलिएर बन्धनदायी वासनामूलक कर्म गर्दै जिउनु अविद्या हो । विद्याको, ज्ञानको बाटोमा कर्मको सम्बन्ध छैन र ? छ कर्मको सम्बन्ध विद्या-अविद्या सबैसँग छ । तर विद्यामा कर्मफलप्रति आसक्ति हुँदैन । जति कर्म गरिन्छन् शुभ नै गरिन्छन् । परमात्माको सेवाको भावले गरिन्छन् । त्यसैले प्रत्येक कर्म मुक्तिदायी यज्ञ बनिरहेको हुन्छ । अविद्यामा चाहिं कर्म गर्दा मनमा दम्भ, दर्प, अभिमान, निष्ठुरता, फलासक्ति रहन्छ र प्रत्येक कर्म बन्धनमय बनिरहेको हुन्छ । अविद्यामा सुख-सुविधाका भौतिक साधन मानिसले बढी भेट्न सक्दछ । तर भावी जीवनका लागि घोरविपत्तिको स्थिति आइपर्ने डर त्यहाँ हुन्छ । किनभने त्यागविना

केवल भोगलिप्सा रह्यो भने परमात्मालाई बिर्सेर केवल शारीरिक सुखको भोगमात्र गरिरह्यो भने मानिस पशुतातिरै वर्लिन पुग्ने डर हुन्छ । मनका वासनाहरू नै मानिसको भावी जीवनका निम्ति निर्णायक आधार हुन्छन् । जस्ता वासनाहरूबाट मानिस परिचालित हुन्छ उसका लागि जीवन होइन, ज्ञानसहितको, आत्मपरिचय-सहितको शुभकर्ममय जीवन अपेक्षित हुन्छ । यही हो हाम्रो साधनाशास्त्रहरूले निर्देश गरेको आध्यात्मिक जीवन विज्ञान । यतैतिर यस पावन मन्त्रले इङ्गित गरेको छ ।

# एघारौं मन्त्र

अब एघारौं मन्त्रमा जीवनको सन्तुलित विकासका लागि विद्या र अविद्या दुवैको सहगामिता रहनुपर्ने कुरामा प्रकाश पारिएको छ ।

**विद्याञ्चाविद्यांच यस्तद्वेदोभयं सह**
**अविद्याया मृत्युं तीर्त्वा विद्ययाऽऽमृतमश्नुते ॥ ११॥**

## सरल अर्थ

ज्ञानरूप विद्यालाई र कर्मरूप अविद्यालाई जसले तात्त्विक रूपले चिनेको हुन्छ र जो यी दुवैका बीच सामञ्जस्य राखेर ज्ञान र कर्मका समन्वयपूर्वक उपयोग गर्दै अघि बढ्छ त्यसले अविद्याको सहाराले मृत्युबाट छुटकारा पाई विद्याको सहाराले अमृतत्वको उपभोग गर्दछ ।

## तात्पर्य

विद्या शब्दले यहाँ ज्ञानलाई लिइएको छ । त्यो ज्ञान शास्त्रीय पनि हुनुपर्दछ, सद्आचरणमा मूर्त भएको पनि हुनुपर्दछ । असल कुरा जान्नु सैद्धान्तिक ज्ञान हो भने असल आचरण गर्नु व्यावहारिक ज्ञान हो, यथार्थ ज्ञान हो । त्यसैले जानकारी र आचरण दुवैद्वारा पुष्ट भएको ज्ञान समष्टिरूपमा विद्या हो । त्यो विद्या जीवनको पूर्ण विकासका लागि नभई नहुने आधारभूत कुरा हो । तर ज्ञानमात्र विद्यामात्र सबै थोक चाहिं होइन । कर्म पनि उत्तिकै महत्त्वपूर्ण छ । कर्मले नै मानिसलाई संसिद्धिमा पुऱ्याउँछ । हाम्रा साधनाशास्त्रहरूले यही बताएका छन् । 'कर्मणैव

हिसंसिद्धिमास्थिता जनकादयः' । केवल ज्ञानले कोही पनि सिद्धिमा पुग्न सक्दैन । 'न च संन्यसनादेव सिद्धिं समधिगच्छति ।' (गीता)

वास्तवमा मानिसको अस्तित्वलाई दिगो र दरिलो बनाउने कर्म नै हो । नित्य मनमा शुभ सङ्कल्पहरू उठिरहनु शुभ-कर्महरूको अविरल अनुष्ठान भइरहोस्, जीवनमा समष्टि कल्याणका कार्यहरू गर्न पाइरहियोस् । यस्तो सौभाग्यपूर्ण जीवन मानिसलाई चाहिन्छ । अनि ऊ माथि उठ्दछ । त्यसैले कर्ममात्र होइन सुकर्म चाहिन्छ, कर्मयोग चाहिन्छ । कर्मलाई सुकर्म बनाउन ज्ञान, विद्या चाहिन्छ । कोरा कर्मलाई कर्मयोग बनाउन विद्याको ज्ञानको उज्यालो चाहिन्छ । आत्मसंयम र विवेकको प्रकाश चाहिन्छ । त्यसैले विद्या र अविद्या अर्थात् ज्ञान र कर्म दुवैको सँगै जानकारी साधकले राख्नुपर्दछ । त्यसो भएमा सुकर्मद्वारा कीर्तिमान भएर मृत्युलाई जित्न सकिन्छ । भौतिक शरीर छुटे पनि यशः शरीर, कीर्तिश्वर रहिरहन्छ अनि यसरी चिरस्मरणीय बनेका साधकहरूलाई विद्या अथवा ज्ञानबाट अमृत सुखको उपभोग गर्न सौभाग्य प्राप्त हुन्छ ।

सार्थक ज्ञान त्यही हुन्छ जो कर्मको माध्यमबाट अभिव्यक्त हुन्छ । 'ज्ञान भारः क्रिया विना' कर्मको सहारा नभई ज्ञान केवल भार हुन्छ । यसरी ज्ञानलाई सार्थकता दिन कर्म चाहिन्छ र कर्मलाई सुकर्म अथवा कर्मयोग बनाउन विद्या अथवा ज्ञान चाहिन्छ । कर्मले ज्ञानको प्रकाश पायो भने मानिस व्यभिचारी हुँदैन, दुर्व्यवहारमा प्रवृत्त हुन सक्तैन अरूको अकल्याण सोच्न सक्दैन । सके सबैको कल्याणै गरौं नसके पनि अरूको अकल्याण त कुनै हालतमा पनि गर्न नपरोस् यस्तो उत्तम विचार विद्या अथवा ज्ञानको प्रकाशमा मात्र मानिसलाई प्राप्त हुन सक्दछ । उपनिषद् दर्शनको

गम्भीर अध्ययनपछि एक जना पाश्चात्यजगत्का मनीषीले अत्यन्त मार्मिक सार निकालेका छन् । उनी भन्दछन् – 'A good life is always inspired by action and guided by knowledge.' अर्थात् सफल सुन्दर कल्याणकारी जीवन त्यही हुन्छ जसमा सधैं सुकर्मको पवित्र उत्प्रेरणा हुन्छ र जो ज्ञानद्वारा निर्देशित हुन्छ । विश्वका मनीषीहरूलाई यसरी अनुप्रणीत गर्न सक्ने उपनिषद्दर्शन हाम्रा लागि त पैतृक सम्पत्तिकै रूपमा छ । तर हामीले कति अध्ययन गर्न सकेका छौं, आफैं विचार गर्नुछ । यसरी एघारौं मन्त्रले हामीलाई जीवनको सफलता निम्ती आधारभूत भूमिका खेल्ने ज्ञान र कर्मको सँगसँगै विकास भएको सुन्दर साधनामय प्रवृत्ति आफूमा विकसित गर्न प्रेरित गरेको छ ।

# बाह्रौं मन्त्र

बाह्रौ मन्त्रमा सांसारिक वासना र ईश्वरप्रतिको आस्थाबारे तात्त्विक कुरा बताइएको छ ।

**अन्धं तमः प्रविशन्ति येऽसम्भूतिमुपासते**
**ततो भूय इव ते तमो य उ सम्भूत्यां रताः ॥ १२॥**

## सरल अर्थ

ती मानिसहरू गाढा अन्धकारमा पर्दछन् जो विनाशशील सांसारिक पदार्थलाई नै सर्वश्व सम्झेर तिनको उपासना गर्दछन् । अनि ती मानिस चाहिं अरू गाढा अन्धकारभित्र पस्न पुग्दछन् जो अविनाशी परमात्माको उपासनाको बहाना गरेर पनि सन्तुलित बन्न जान्दैनन् र प्रकारान्तरले कामनाकै जालोमा जेलिइरहेका हुन्छन् ।

## तात्पर्य

यस मन्त्रमा आएको सम्भूति र असम्भूति शब्द अत्यन्त मार्मिक छन् । सम्यक् अस्तित्व भएको शाश्वत सनातन वस्तुलाई यहाँ सम्भूति शब्दले सम्झाएको छ । जो नाशवान् छ, क्षण भङ्गुर छ, नश्वर छ त्यसलाई चाहिं असम्भूति शब्दले बताइएको छ । सम्भूति र असम्भूति शब्दले संसारको उत्पत्तिसम्बन्धी धारणालाई बताइएको हो भन्ने मान्नेहरू पनि छन् । त्यसअनुसार परमात्माबाटै जगत्को उत्पत्ति भएको हो भन्ने मान्ने धारणा सम्भूति हो र संसार आफैंआफ प्रकृतिबाट पैदा भएको हो भन्ने धारणाको नाम असम्भूति हो । यीमध्ये जुन अर्थ गरे पनि परमात्मालाई मान्ने र जगत्लाई मान्ने अर्थ आउँछ ।

जो परमात्माको अस्तित्वप्रति विश्वास नै राख्न भ्याउँदैनन्, जे छ यही जगत् छ, शरीर छ खानेपिउने कुरा छन्, भौतिक सुख छ त्यति नै सबै थोक हो भन्ने सम्झन्छन् तिनीहरू आफ्नो धारणाअनुसार नै आध्यात्मिक समुन्नतिबाट वञ्चित हुन पुग्दछन् । सुख-सुविधाहरूमै अलमलिएको जडतापूर्ण जीवन त्यहाँ हुन्छ । 'म खाऊँ मै लाऊँ' को भावनाले त्यहाँ प्रभाव जमाएको हुन्छ । न परोपकार छ न सेवा । न अरूको सुख-दुःखमा कुनै ताल्लुक छ, न त्यसको निराकरण निम्ति कुनै चासो । सधैं स्वार्थको कालो जालोले चारैतिरबाट जेलिएको छ । अरूलाई छलेर पनि ढाँटेर पनि आफूलाई राम्रो हुन्छ भने त्यो पुरूषार्थ भयो । यस्ता मानिसहरू ज्ञानसाधकको उपहास गर्दछन् । तिनीहरूलाई अबुझ लाटा भनिठान्दछन् । परमात्मासितको सम्बन्ध नै नभएको असम्भूतिको उपासना गर्ने जीवनको दशा यस्तै हुन्छ । जसले निरन्तर विनाशशीलको, क्षणिकको, नश्वरको, ससीमको अराधनामा समय बिताउँछ उसको मनस्थिति त्यस्तै रङ्गमा रङ्गिन पुग्दछ । जो देखिन्छ सुनिन्छ त्यही नै सबै थोक हो, त्यहाँभन्दा पर केही छैन भन्ने कुण्ठित धारणा यस्ताको बन्न जान्छ । ससीमकै बारेमा सधैं चिन्तनशील रहने हुनाले असीमलाई अनन्तलाई सम्झिनै नसक्ने एकाङ्गी दृष्टि उनिहरूको बन्न पुग्दछ । त्यसैले सत्य कुरातिर शाश्वत वस्तुतिर उनीहरूको ध्यानै पुग्दैन । यसैलाई 'अन्धं तमः प्रविशन्ति येऽसम्भूतिमुपासते' भनिएको हो ।

अब तिनीहरूतिर दृष्टि दिऔं जो सम्भूतितिर, प्रभु श्रीहरिको उपासनातिर, अविनाशीको आराधनातिर, शाश्वतको साधनातिर सधैं सधैं संलग्न हुन्छन् । तर नित्य र अनित्यबीच समन्वय राख्न सन्तुलन मिलाउन जान्दैनन् । नित्यको, सनातनको आराधना

गर्दछु भनेर सम्पूर्ण रूपमा अनित्य वस्तुको सम्बन्ध-विच्छेद गर्न लाग्यो भने मानिस घोर अनर्थमा पर्न पुग्दछ । उदाहरणका लागि नित्य वस्तु आत्मा हो, अनित्य वस्तु शरीर हो । बाहिरका लागि चाहिने आहारादि सबै कुरा अनित्य हुन् । यी सबै अनित्य हुन् भनेर यिनलाई सम्पूर्ण रूपमा छोड्न लाग्यो, उपेक्षित गर्न लाग्यो भने शरीरयात्रा नै चल्दैन । अनि मनमा असन्तुष्टि हुन्छ, शरीर रोगी हुन्छ । झन्झन् चिन्ता बढ्दछ । आहारविहार अनित्य वस्तुभित्र पनि यिनको सन्तुलन नितान्त आवश्यक हुन्छ भौतिक साधन साधन सबै अनित्य हुन् तर तिनको आवश्यकता पर्दछ । नत्र शरीर स्वस्थ र शक्तिशाली हुँदैन शरीरको दुर्बलताले मनमा पनि प्रभाव पार्दछ । मानिस असन्तुलित बन्न पुग्दछ र अशान्तिको सिकार हुन्छ । त्यसैले भनियो- 'ततो भूय इव ते तमो उ सम्भूत्यां रताः।' यहाँ प्रयोग भएको रताः' शब्दले एकोहोरिएर असन्तुलित रूपले लाग्नेहरूलाई लक्ष्य गरिएको छ । अर्को कुरा एक थरी अविनाशी ईश्वरको उपासनामा लागिरहेर पनि अप्रत्यक्ष रूपले संसारकै उपासना गरिरहेका हुन्छन् जो निष्कामतातिर अघि बढ्न नसकी सकाम भावनाले गर्दा ईश्वरको सामु पनि यो देऊ र त्यो देऊ भनेर मागिरहन्छन्, तिनले सही अर्थमा ईश्वरको होइन भौतिक पदार्थहरूको आराधना गरिरहेका हुन्छन् । किनभने त्यहाँ ईश्वर साध्य वा लक्ष्य होइन साधन बनिरहेका हुन्छन् । उनीसँग संसारका साधन माग्नु प्रकारान्तरले संसारकै आराधना गर्नु हो । त्यसैले ज्ञानको, भक्तिको आध्यात्मिक समुन्नतिको लक्ष्यले ईश्वरोपासना गर्नेहरूभन्दा भिन्नै क्षणभङ्गुर वस्तुहरूको प्राप्तिको लक्ष्य राखेर ईश्वरोपासना गर्नेहरूलाई यहाँ 'ततो भूय ईव ते तमः प्रविशन्ति' भनेर नश्वरका लागि ईश्वर सम्झिनेहरूले गर्नुपर्ने कुरा यहाँ बताइएको छ । स्वामी विवेकानन्दले एउटा प्रवचनमा भन्नुभएको

थियो- 'बेइमान आस्तिकभन्दा बरू इमानदार नास्तिक असल हुन्छ ।' यथार्थ कुरा बुझ्नेहरू यसै भन्दछन् । ईश्वरको उपासना यथार्थ रूपमा गर्ने हो भने मानिस सधैं अरूप्रति हितैषी हुन्छ उसमा सहज रूपले सेवामुखी प्रवृत्ति हुन्छ । आफूले गरेको कर्मबाट आफूलाई केही मिलोस्-नमिलोस् ईश्वरको साँचो भक्तले परवाह गर्दैन । उसलाई त कल्याणकारी शुभकर्मसँग मतलव हुन्छ । त्यो ऊ अविराम रूपले गरिरहन्छ । कर्म उसको ध्येय हुन्छ फलप्राप्तिसित ऊ बाँधिंदैन । साँचो ईश्वरभक्तका लागि भौतिक पक्ष पनि साधनको दृष्टिले उपयोगी नै हुन्छ । ऊ घृणा गर्दैन । बरु जे प्राप्त हुन्छ त्यसको सदुपयोग गर्दछ । असन्तुलित हुँदैन । यस्तो साँचो ईश्वरोपासनाप्रति यहाँ भनिएको होइन । बाहिरबाट भौतिकताप्रति घृणा राखेजस्तो गरेर पनि आन्तरिक रूपबाट भौतिक वस्तुकै प्राप्तिमा, सांसारिक पदार्थकै उपलब्धिमा केन्द्रित रहेर ईश्वरको कृत्रिम उपासना गर्नेहरूलाई यहाँ झन् गाढा अन्धकार प्राप्त हुने कुरा बताइएको छ । सारांशमा परमात्मालाई सम्झदै नसम्झी केवल जड जगत्को उपासना गर्नु जडताको बाटो हो । चेतन मानवको स्वाभाविक समुन्नतिको बाटो त्यो हुँदैन । साथै असन्तुलित र अति कामनाले ईश्वरको साधना गर्नु पनि हितकर नहुने हुनाले स्वस्थ र सन्तुलित दृष्टि राखेर जीवनलाई सफल बनाउने प्रेरणा यस बाह्रौं मन्त्रद्वारा दिइएको छ ।

# तेह्रौं मन्त्र

तेह्रौं मन्त्रमा परमात्माको उपासनाबाट र सांसारिक आसक्तिबाट प्राप्त हुने फलको भिन्नताबारे बताइएको छ ।

अन्यदेवाहुः सम्भवादन्यदाहुरसम्भवात्
इति शुश्रुम धीराणां येनस्तद् विचचक्षिरे ॥१३॥

## सरल अर्थ

सदा स्थायी सनातन, अविनाशी परमात्माको उपासना साँचो रूपमा गर्दा साधकलाई अर्कै फल प्राप्त हुन्छ । नाशवान् क्षणभङ्गुर धनसम्पत्ति, लौकिक सुख, सांसारिक पदपदार्थहरूप्रतिको आसक्तिबाट अर्कै परिणाम मिल्दछ । जीवनको तत्त्वरूप यस परमार्थ वस्तुको प्रतिपादन जसले गरे ती धीर महामानवहरूबाट हामीले यस्तै सुनेका छौं ।

## तात्पर्य

सम्पूर्ण सृष्टिरचना नै अविनाशी र विनाशशील, अपरिवर्त्य र परिवर्तनशील, स्थायी र अस्थायीबीचको सम्बन्धमा अडेको छ । भगवान् श्रीहरि सदा अविनाशी, शाश्वत र सनातन हुनुहुन्छ । 'ममैवांशो जीवलोकें जीवभूतः सनातनः' भनेर भगवान् श्रीकृष्णले गीतामा यही कुरा बताउनुभएको छ । परा र अपरा गरी भगवान्का दुइटा प्रकृति छन् । परा प्रकृति जीवात्माका रूपमा र अपरा प्रकृति चाहिं त्रिगुणमयी स्थूल प्रकृतिका रूपमा छिन् । अपरा अथवा स्थूल जडात्मिका प्रकृतिले पैदा गरेका सम्पूर्ण गुणमय पदार्थहरू नाशवान् छन् । क्षणभङ्गुर छन्, विकारपूर्ण छन् । परिणामी छन् । शरिर

जडात्मिका अपराप्रकृतिको उपज हो । यो नाशवान् छ, क्षणभङ्गुर छ् । परिवर्तनशील छ । तर आत्मा अविनाशी, निर्विकार, अपरिणामी तथा अपरिवर्त्य छ । सानो शरीरलाई थाम्ने, चलाउने आदि गर्ने व्यक्ति आत्मा जीवात्मा हो । सम्पूर्ण सृष्टिचक्रका नियामक, यसलाई थाम्ने, चलाउने आदि गर्ने समष्टि आत्मा परमात्मा हुन् । बाहिरी स्थूल सृष्टि नाशवान् छ, परिवर्तनशील छ । यसभित्रका पदार्थहरू नाशवान् र परिवर्तनशील छन् । यिनका नियामक सञ्चालक परमात्मा अविनाशी र शाश्वत छन् । शाश्वतको उपासनाबाट साधकलाई जे प्राप्त हुन्छ, त्यो पनि शाश्वत नै हुन्छ । त्यसैले साधनशास्त्रहरूले सधैं आत्माको अनुभूति गर्ने, परमात्माको उपासक बन्न प्रेरित गरेका छन् । 'अन्यदेवाहुः सम्भवाद्' भनेर यहाँ यतैतिर प्रेरणा जगाइएको छ ।

विकारमय, परिणामी जगत्का पदार्थहरूप्रति मात्र आसक्ति राख्यो भने मानिसलाई क्षणिक सुखाभास जरूर मिल्दछ तर शाश्वत सनातन सुख प्राप्त हुँदैन । शरीर छ, शारीरिक सुख छ, त्यत्तिमै जीवन सकिन्छ । मीठो मसिनो खाने, राम्रो कोमल पहिरिने लालसामै जीवन रित्तिन्छ । शारीरिक सुखसँग टाँसिएरै जीवन बित्ने हो भने कुनै ठूलो काम मानिसले गर्न सक्दैन । अरूका लागि केही सेवा, पछि परेकाहरूका लागि कल्याणकारी कार्य जस्ता कुरा मनमा फुर्न भ्याउँदैनन् । यी त आध्यात्मिक भावनाको विकासबाट प्राप्त हुने र आत्मिक सुखमा सुखी बन्न जानिसकेपछि मात्र मानिसमा व्यक्त हुने गुण हुन् । यिनका लागि त्याग आवश्यक छ, सेवा भावना आवश्यक छ । अरूको हितका लागि परिश्रमी बन्ने बानीको आवश्यकता छ । यी शाश्वत गुणहरूले नै मानिसलाई शाश्वत सुख प्रदान गर्दछन् र ऊ अमरताको बाटोमा अघि बढ्न

सक्दछ । यही सत्यको बाटो हो, धर्मको बाटो हो, परमात्माको उपासना गर्ने बाटो हो । त्यसैले मानिएको हो 'अन्यदेवाहुः सम्भवात्' 'अन्यदाहुरसम्भवात्' भनेर । बुझ्नुपर्ने कुरा यत्ति हो सत्यको, अविनाशीको पक्षमा नलागी शाश्वतलाई पाउन सकिँदैन । नाशवान्को उपासनाले अविनाशीमा पुऱ्याउन कहिल्यै सक्दैन् साधनाशास्त्रहरू भन्दछन्– 'यो यच्छ्रद्धः स एव सः' अर्थात् जसलाई जुन कुरामा श्रद्धा हुन्छ उसको स्वरूप त्यस्तै हुन्छ ।

एक जना राजकुमार सानै अवस्थामा हराएका थिए । वन–जङ्गलमा बस्ने भिल्लले उनलाई अपहरण गरेर लगेको थियो । उनको जीउडाल देखेर वनमा बस्नेहरू सबै मुग्ध हुन्थे । राजकुमार बिस्तारै–बिस्तारै बढ्दै गए । उनी सम्पूर्ण वनवासीहरूका प्रिय थिए, भूषण थिए । तर उनी त्यति सुलक्षण, त्यति प्रभावशाली व्यक्तित्वका धनी भए पनि सङ्गतले गर्दा आफूलाई पनि भिल्ल नै ठान्दथे । बाहिरबाट उनले पनि भिल्लहरूकै पहिरन लगाएका थिए, ढाल र भाला लिएर सिकार खेल्दथे । एक दिन राजा वनमा जाँदा तिनलाई देखे । राजालाई आफ्नो हराएको छोराको सम्झना भयो । नगिच गएर चिनारी गर्न खोज्दा ती राजकुमारले भिल्लको भाषामा आफू भिल्ल भएको कुरा आग्रहसाथ बताए । पछि सम्पूर्ण वृत्तान्त सुनाएर सम्झाईबुझाई गर्दा उनलाई आफू राजकुमार भएको बोध भयो । आफ्नो परिचय पाएपछि उनी बाबुसँग दरबार फर्के । मानिस जस्तो सङ्गतमा, जस्तो चिन्तनमा, जस्तो संस्कारमा हुर्किन्छ त्यस्तै उसको मनस्थिति बन्दछ । जस्तो मनस्थिति हुन्छ मानिसले प्राप्त गर्ने उपलब्धि पनि त्यस्तै हुन्छ । आफ्नो मनस्थितिले गर्दा राजकुमार पनि भिल्ल बनिरहेका थिए ।

परमात्मा सबैका प्रिय छन्, हितैषी छन्, मानिस पनि उनको साँचो उपासनाद्वारा सबैको प्रिय, सबैको हितैषी बन्न सक्दछ। परमात्मा सर्वव्यापक छन्, उनको उपासना गर्ने मानिसमा पनि विशालताको उदय हुन्छ। ऊ कुण्ठित, सङ्कीर्ण, अविकसित स्थितिमा रहन सक्दैन। सबैप्रति सेवा, मैत्री, सद्भावना, परमात्माको उपासनाबाट मानिसमा विकसित हुन्छ। नश्वर जड जगत्को आसक्तिले यस्तो उत्तम लाभ प्राप्त गर्न दिंदैन। त्यसैले 'अन्यदाहुरसम्भवात्' भनेर विनाशशीलको आसक्तिबाट माथि उठ्न यस मन्त्रले प्रेरणा दिएको छ।

# चौधौं मन्त्र

चौधौं मन्त्रको सङ्केत अझ मार्मिक छ । यस मन्त्रमा जीवनमा सफलता प्राप्त गर्न चाहिने सन्तुसलत दृष्टिकोणमाथि बल दिइएको छ र अविनाशी र नश्वरबीच, अमृत र मरणशीलबीच कस्तो सम्बन्ध कायम राख्ने ? यिनलाइ कसरी सम्झिने र लिने भन्ने बारेमा यस मन्त्रमा प्रकाश पारिएको छ ।

**सम्भूतिञ्च विनाश्ञ्च यस्तद्वेदोभयंसह**
**विनाशेन मृत्युं तीर्त्वा संम्भूत्यामृतमश्नुते ॥१४॥**

## सरल अर्थ

सम्भूति अर्थात् सम्यक् अस्तित्व भएको परमात्मसत्ता तथा असम्भूति विनाशशील भौतिक जगत् दुवैलाई जसले एकैसाथ तात्विक रूपले सम्झेको हुन्छ, त्यसैले नाशवान् भौतिक वस्तुहरूको कल्याणकारी कार्यमा सदुपयोग गरेर मृत्युको सीमालाई तर्दछ । र अविनाशी परमात्माको उपासनाद्वारा परमसुख एवं शाश्वत शान्तिरूप अमृतत्वको उपभोग गर्दछ ।

## तात्पर्य

परमात्माको उपासना र भौतिक पदार्थको सदुपयोग यी दुई कुरालाई मूलरूपमा यहाँ मृत्युबाट पारि पुगेर अमृतत्वको उपभोग गर्नमा सहायक बताइएको छ । हिन्दू धर्मसंस्कृतिले बताएका सम्पूर्ण शिक्षाहरूलाई सूत्र रूपमा समेटेर भन्ने हो भने सातसूत्रीय मूल्यमर्यादाहरूमध्ये थालनीका दुई प्रमुख मर्यादाहरूमा यस मन्त्रले प्रकाश पारेको छ जसलाई विस्तृत रूपमा लिने हो भने अन्य पाँच मर्यादाहरू पनि यिनैमा अन्तर्भूत हुन् सक्तछन् । हिन्दू समाजका लागि आवश्यक सातसूत्रीय मर्यादामय जीवन साधनालाई यस

प्रकार लिन सकिन्छ : पहिलो हो परमात्माको उपासना । परमात्मा प्राणीमात्रका मूल हुन्, परमपिता हुन्, जीवनदाता हुन्, जीवमात्रलाई शक्ति, बुद्धि ज्ञान, प्रकाश सबै उनैबाट प्राप्त हुन्छ । त्यसैले उनीप्रति कृतज्ञ बन्नु, उनको उपासना गर्नु जीवमात्रको सर्वप्रथम कर्तव्य हो । दोस्रो साधना हो परमात्माको कृपाले आफूसित जे छ त्यसको केवल सदुपयोग गर्नु, दुरुपयोग हुन नदिनु । धन छ, बल छ, बुद्धि छ, सबै थोकको सदुपयोग गर्नु, कल्याणकारी असल काममा मात्र लगाउनु । तेस्रो साधना हो स्वाध्याय । जीवनमा स्वधर्मीनुकूल पवित्र संस्कार भरिदिने, पवित्र चिन्तन र विचारशक्तिलाई जगाइदिने असल धार्मिक, आध्यात्मिक, नैतिक शिक्षा दिने सद्ग्रन्थहरू पढ्नु । चौथो साधना हो त्यसरी प्राप्त गरेको ज्ञानलाई संयम र विनयद्वारा जीवनको प्रतिदिनको व्यवहारमा प्रयोग गरेर असल चरित्र एवं नैतिकताको विकास गर्नु । पाँचौं साधना हो उपकार । आफूभन्दा पछि परेकाहरूलाई धनले, बुद्धिले, बलले जति सकिन्छ मद्दत गर्नु । छैटौं साधना हो आफूलाई साढे तीन हातको जड शरीर नसम्झी जगतप्रकाशक, असीम, अनन्त, अविनाशी, अजर-अमर परमात्माको अंश स्वरूप सच्चिदानन्दमय आत्माका रूपमा भावना गर्नु । सातौं साधना हो मोक्ष, निर्वाण, कैवल्य, परमपद, प्रभुप्राप्ति, ब्रह्मसाक्षात्कार आदि शब्दले बताइने आध्यात्मिक मुक्तिको महान् लक्ष्यप्राप्तिमा सधैं जागरूक रहनु । यो मनुष्यजीवनको सर्वोपरि उपलब्धि हो। यसैका लागि मानवजीवनलाई मुक्तिको खुला ढोका 'मुक्तिद्वारमपावृतम' भनिएको हो । यो प्राप्त गर्न सकिएन भने 'महती विनष्टि:' हुन्छ । यस सत्यलाई सधैं सम्झिरहनु । यी सात साधना जसले गर्न सक्यो जीवनको पूर्ण विकासमा ऊ सफल हुन्छ । यस मन्त्रमा बताइएका कुरालाई यी सातसूत्रीय साधनाहरूको थालनीका मूल कुरा पनि मान्न सकिन्छ र भौतिक वस्तुको सदुपयोगलाई विस्तृत अर्थमा लिने हो भने सातवटै साधनाको अन्तर्भाव यसैमा पनि हुन सक्दछ । त्यस्तो

मूलभूत साधना यस पावन मन्त्रले बताएको छ । जीवन भन्नु नै सम्भूति र असम्भूतिको, अविनाशी र विनाशशीलको सह-अस्तित्वबाट चलेको हुन्छ । शरीर र आत्मा, जगत् र जगदीश्वर सृष्टिका द्विपक्षीय मूल तत्त्व हुन् । नाशवान् जत्तिको सदुपयोग गर्नुछ, अविनाशीको उपासना गर्नुछ । नाशवान्को सदुपयोगद्वारा मानिस मरेर पनि बाचिँरहेको हुन्छ । त्यसैले ऊ मृत्युबाट पारि पुग्दछ । अनि परमात्माको साधनाले, अविनाशीको उपासनाले उसलाई शाश्वत सुखरूप अमृत प्राप्त हुन्छ । 'विनाशेन मृत्युं तीर्त्वा सम्भूत्यामृतमश्नुते' भनेर यहाँ यसैलाई बताइएको छ ।

यो साधना मानवमात्रले गर्न सक्दछन् । यसका लागि धेरै धन, धेरै विद्या, ठूलो जात जस्ता कुरा चाहिंदैन । धनी पनि गरिब पनि, ठूलो जात पनि सानो जात पनि, धेरै पढेका पनि थोरै पढेका पनि यसमा सबैको अधिकार छ । नाशवान्को सदुपयोग गरेर, आफूसँग भएको पैसाले परमार्थका लागि कुवा खनाएर घाँसी पनि मृत्युबाट पारि पुग्यो । घाँसीबाट अनुप्राणित भएर आदिकवि भानुभक्तले पनि मृत्युबाट पारि पुग्न र अमृतत्वको भागी बन्न भनेर नै परमात्माले मानिसलाई पशुपक्षीलाई नदिएका ठूला-ठूला विशेषता दिएका छन् । अरू निम्ति हित चिताउने मन राम्रा राम्रा कुरा सिक्ने र विवेक गर्न सक्ने बुद्धि, परोपकारी हात, अरूको दुःखमा रसाउने आँखा, अरूको हृदयमा आनन्द र उत्साह थपिदिन सक्ने अमृतवर्षी वाणी, अरू प्राणीलाई प्राप्त छैनन् । मानिस त अमृतको उपभोगसम्मको महान् लक्ष्य लिएर आएको छ । त्यसैले उसलाई साधन र क्षमता पनि त्यसै अनुरूप दिइएका छन् । तिनको मानिसले सधैँ सदुपयोग गर्नुछ । केवल सदुपयोग गर्नुछ । दुरुपयोग हुन दिनु छैन । यसरी परमात्माको उपासना र जगत्का पदपदार्थको सदुपयोग यी दुई मूल कुरामात्र जीवनमा लिन सकेमा मानिसको साँचो कल्याण हुन्छ ।

# पन्ध्रौं मन्त्र

यस्तो सन्तुलित स्वस्थ, सुन्दर, दृष्टिकोणसम्पन्न जीवन प्राप्त गर्ने उद्देश्यले पन्ध्रौं मन्त्रमा त्यसै निम्ति प्रभु श्रीहरिमा प्रार्थना गरिएको छ । यस मन्त्रमा जगत् र त्यसप्रतिको ममताको संस्मरण गराउँदै मोहमुक्त, ममताबाट माथि उठेको पूर्ण जीवनको प्राप्तिमा सहयोगी हुने सत्य धर्मको दर्शन निम्ति जगत्का पोषणकर्ता परमपिता प्रभु श्रीहरिसँग अन्तर्निवेदन गरिएको छ ।

**हिरण्मयेन पात्रेण सत्यस्यापिहितं मुखम्**
**तत्त्वं पूषन्नपावृणे सत्यधर्माय दृष्टये ॥१५॥**

## सरल अर्थ

सुर्वणमय भाँडाले सत्यको मुख ढाकिएको छ । जगत्का पोषणकर्ता हे परमपिता प्रभु । त्यस सुवर्णमय आवरणलाई हटाइदिनुहोस्, म सत्य धर्मको दर्शन गर्न चाहन्छु ।

## तात्पर्य

सम्पूर्ण सृष्टि परमात्माबाटै उत्पन्न भएको छ । परमात्मामै अवस्थित छ । महाप्रलयपछि अन्त्यमा पनि परमात्मामै गएर लीन हुन्छ । तैपनि सबै सृष्टिचक्रका परमाधार परमपिता प्रभुलाई जीवजगत्ले देख्न वा अनुभव गर्न सकिरहेको हुँदैन । यो कति आश्चर्यलाग्दो कुरा हो ? यसमा भगवान्कै अपरा प्रकृतिस्वरूप अविद्याको मोहक आवरण कारण बनिरहेको हुन्छ । सम्पूर्ण नाशवान् जगत्प्रपञ्चलाई थामेर यसको सञ्चालनमा आधार बनिदिने सत्यस्वरूप परमात्माको दर्शन त्यसै कारणले जीवात्मालाई हुँदैन । जगत्प्रतिको मोह र ममताको मीठो आवरणले छेकेर त्यसभन्दा भित्रका जगदीश्वरको दर्शन गर्नमा जीवात्माको दृष्टि असमर्थ

भइरहेको हुन्छ । जीवमात्रको परमधर्म जीवनदाता परमात्माप्रति कृतज्ञताको भाव राख्दै उनले दिएको यो सौभाग्यमय जीवनद्वारा उनैको सेवा गर्नु हो । 'सत्य धर्म' शब्दले यहाँ यसैलाई लिएको छ । परमसत्यस्वरूप परमात्मामा पुऱ्याइदिने र असत्य, क्षणभङ्गुर नाशवान्को सदुपयोगद्वारा सत्य, अविनाशी तथा शाश्वत परमपद प्रदान गर्ने साधना, अनुशासन, संयम र सेवाले भरिएको सुन्दर मार्ग नै सत्यधर्म हो । त्यो छेकिएको छ अविद्याको ममतामय आवरणले । साधक ऋषि त्यसैले यहाँ त्यस आवरणको निराकरण गरिदिने बारेमा परमात्मासँग प्रार्थना गर्दछन् ।

वास्तवमा प्रत्येक मानव अनन्तको, असीमको सन्तान हो । यही वेदको पावन निर्देश छ 'श्रृण्वन्तु विश्वे अमृतस्य पुत्राः' । मानिस अमृतको सन्तान भएकाले उसमा आत्मविकासका अनन्त सम्भावनाहरू हुन्छन् । ऊ जहाँ जन्मेको र बाँचिरहेको हुन्छ, त्यो समाज, राष्ट्र, समष्टि जीवन उसबाट लाभान्वित बन्न सक्दछ । आत्मविकासको सही बाटो लिन सकेमा उसको सेवाभावपूर्ण उदार जीवननिष्ठा सम्पूर्ण समाजकै निम्ति वरदान बन्न सक्दछ । तैपनि मानिस ममता र स्वार्थको सुवर्णमय मोहक आवरणबाट छोपिएर आत्मविकासको, समाजका निम्ति आफूबाट हुनसक्ने असाधारण योग्दानका लागि सोच्नै भ्याउँदैन । आफ्नो जीविका, आफ्नो परिवार, आफ्नो धन यिनै परिधिभित्र कुण्ठित भएर बूढो हुन्छ । त्यो जीविका, त्यो धन केमा पूर्ण र सार्थक हुन्छ ऊ सोच्नै भ्याउँदैन । यस्तो किन हुन्छ ? त्यही मोहमय सुवर्णपात्रले ढाकिएको हुनाले मानिसले साँचो जीवन नै फेला पार्न सकिरहेको हुँदैन ।'त्तत्वं पूषन् ! अपावृणु सत्यधर्माय दुष्टये' । परमात्मन् ! त्यो मोहमय, विकासको बाधक, सङ्कीर्णताको पोषक सुनजस्तै प्रिय लाग्ने आवरण हटाइदिनुहोस्, हामी सत्यधर्मको दर्शन गर्न सक्ने बनौं । यही यहाँ प्रार्थना गरिएको छ ।

शान्ति अमृत हो, अशान्ति विष हो । तर मोहको आवरणले अशान्तिपूर्ण राग, द्वेष र कलहलाई नै मीठो बनाइदिन्छ । मानिस त्यसैमा रमाइलो मान्दछ । मरेर पनि बाँच्न पाइने, अनन्त जीवन, अमरता सौभाग्य हो, सधैंलाई विस्मृत भएर मरेर जानु दुर्भाग्य हो तर मोहमय सुवर्णको आवरणले गर्दा मानिस मरणशील वस्तुहरूको फेरमा पर्दापर्दा सधैंका लागि मरेर जाने बाटोतिर ओर्लिरहेको हुन्छ । आफूसँग जे छ त्यसको बढीभन्दा बढी सदुपयोग गरेर अमर बन्ने सौभाग्य लिनपट्टि लाग्नै सक्दैन । यसैले हामीले यस पावन मन्त्रको सार सन्देशलाई सधैं हृदयङ्गम गरेर, अविधाको त्यस मोहक सुवर्णमय आवरणबाट बचेर सत्यधर्मलाई देख्नुछ र जीवनको पूर्ण विकासमा समर्थ बन्नुछ । समष्टि हितको कार्यमा सतत संलग्न रहेर आफ्नो जीवनलाई साँचो जीवन बनाउनुछ ।

सबैभन्दा मूल कुरा जुन उज्यालोले सम्पूर्ण जीवन उज्ज्वल आलोकमय बन्न सक्दछ त्यो हो परमात्मा श्रीहरिप्रति कृतज्ञतापूर्ण सेवाभावना । यसबाट जीवनको मूल्य बोध हुन्छ । मानिसले जिउनुको अर्थ सम्झिन्छ । साधन के हो साध्य के हो त्यो विवेक प्राप्त गर्दछ । आफूसँग जे छ त्यसको केवल सदुपयोग हुन्छ । दुरुपयोग हुन पाउँदैन । मानिस थोरैको उपयोग गरेर धैरै फल प्राप्त गर्न जान्ने हुन्छ । त्यसैले परमात्माको उपासना सर्वोपरि जीवनमूल्य हो । परमात्मा नै जीवनदाता र पोषणदाता हुन् । जीवनदाताप्रति, पोषणदाताप्रति कृतज्ञ बनौं, उनको सेवामा केही राम्रा काम गरौं र मोहको स्वर्णिम आवरणबाट बचेर स्वधर्मको सत्यधर्मको दर्शन गर्न सक्षम बनौं यही पवित्र पेरणा यस पावन मन्त्रले दिन्छ ।

# सोह्रौं मन्त्र

सोह्रौं मन्त्रमा प्राणीमात्रका जीवनदाता, सम्पूर्ण जीवनजगत्का पोषणकर्ता परमपिता परमात्मासँग साधकले उहाँको कल्याणकारी स्वरूपको परिचय प्राप्त गर्न पाऊँ भनी प्रार्थना गरेको छ । साथै अविद्याको, मायाको, आसक्तिको आवरण हटाएर परमात्माकै अंशका रूपमा आफ्नो मूल स्वरूप प्राप्त गर्न, अनुभव गर्न समर्थ बन्ने आकाङ्क्षा राख्दै साधकले यहाँ प्रभुमा अन्तर्निवेदन गरेका छन् ।

**पूषन्नेकर्षे यम सूर्य प्राजापत्य व्यूह रश्मीन् समूह तेजः**
**यत्ते रूपं कल्याणतमं तत्ते पश्यामी योसावसी पुरुषः**
**सोहमस्मि । १६**

## सरल अर्थ

'हे जगत्पोषक ! हे ऋषिहरूका पनि परमऋषि ! हे सबका नियन्ता ! हे साधकहरूको मनमा प्रकाश दिने परम ज्ञानरूप प्रभो ! हे प्रजापालक राजर्षिहरूका पनि प्रेरणादाता ! हजुरकी बहिरङ्ग शक्तिस्वरूपा अविद्या अथवा मायाका किरणहरूलाई समेट्नुहोस्, आफ्नो चारैतिर फैलिरहेको तेजलाई संवरण गर्नुहोस्, आफैंमा लीन गर्नुहोस् । बाहिर छरिएको चमचमाउँदो कान्तिले गर्दा मैले हजुरका सोम्य, मनोहर यथार्थ स्वरूपको दर्शन गर्न पाऊँ । म अर्को होइन हजुरकै अंश हुँ । जगत्प्रकाश सूर्यमा हजुरको जुन पुरुषरूप व्याप्त छ ममा त्यही पुरुषरूप आत्मतत्त्वका रूपमा व्याप्त छ ।

## तात्पर्य

आध्यात्मिक साधनाको सारतत्त्व हो जीवात्माले परमात्मासँग आफ्नोपनको अनुभव गर्नु । 'म जगत् पनि हैन, जगत्को पनि

हैन् । म त भगवदंशस्वरूप आत्म हुँ । जगत्को हैन जगदीश्वरको हुँ ।' भन्ने जब जीवात्माले अनुभव गर्दछ, अनि आध्यात्मिक साधनाको सही फल साधकलाई प्राप्त हुन्छ । त्यही अनुभव प्राप्त गर्न यस मन्त्रले शिक्षा दिएको छ । अविद्याको मायाको घेराभित्र रहेसम्म परमात्माको त्यो परम कल्याणकारी स्वरूपको दर्शन प्राप्त गर्नु सम्भव हुँदैन । हाम्रा आध्यात्मिक शास्त्रहरूको पवित्र सङ्केतअनुसार परमात्मा जति नगिचको परमात्मा जति प्रिय, हितैषी समदर्शी, सबैको बन्धु, सबैको प्रकाशक, अरू कोही छैन, हुन पनि सक्दैन । भगवान् आफैं भनिरहनुभएको हुन्छ– 'ममैवांशो जीवलोके जीवभूतः सनातनः ।' हे जीवात्मा ! तिमी मेरै सनातन अंश हौ, मेरा हौ । तिमी नर हौ म नारायण हुँ । तिमी अंश हौं, म अंशी हुँ । तिम्रो सजातीय नाशवान् संसार होइन, म चाहिं तिम्रो सजातीय हुँ । साधना गर, मलाई चिन मैमा आइपुग । म कसैलाई द्वेष पनि गर्दिन, आसक्ति पनि राख्दिन, तर जो मैमा निश्छल प्रीति राख्दछन्, मेरो भजन गर्दछन् तिनीहरू सधैं मैमा हुन्छन् । म सदा तिनीहरूमै हुन्छु । सम्पूर्ण प्रणीहरूको सबैभन्दा प्रिय आत्मा म नै हूँ । मेरो भक्तको विनाश कहिल्यै हुँदैन । कति मिठो, कति प्रिय आश्वासन छ परम कृपामय प्रभुको ? 'अहं नारायण स्त्वं तु सखा मम नरः स्मृतः' अहमंशी त्वमंशी त्वमंशोऽस्ति त्वं ममासि न ससुतेः' समोहं सर्वभूतेषु न मे द्वेष्योस्ति न प्रियः । ये भजन्ति तु मां भक्त्या मयि ते तेषु चाप्यहम् ।' अहमात्मा गुडाकेशः सर्वभूताशयस्थितः । कौन्तेय ! प्रतिजानीहि न मे भक्तः प्रणश्यति ।' कस्तो अमृतमय, कस्तो आनन्ददायी स्वरूप छ प्रभुको ? परमात्माको यस्तै कल्याणकारी स्वरूपको अनुभूति गरेर जीवनको उच्चतम स्थितिमा पुग्न यस पावन मन्त्रले प्रेरणा दिन्छ । 'यत्ते रूपं कल्याणतमं तत्ते पश्यामि' भनेर ।

परमात्माको यस्तै कल्याणकारी निकटतम स्वरूपलाई प्रत्येक जीवात्माले चिन्नुछ, अनुभव गर्नुछ । आफ्ना जीवनमा आइपर्ने घातप्रतिघात र दुःख-कष्टका निमित्त ईश्वरलाई दोष दिनुहुन्न । प्राणीले दुःख वा सुख जे भोग्दछ त्यो उसको आफ्नै कर्मको फल हो । जस्तो रोपिन्छ त्यस्तै फल लाग्दछ । त्यसैले मानिसलाई आज जे प्राप्त छ, त्यो हिजोको उब्जनी हो । भोलि जे प्राप्त हुन्छ, त्यो आजको रोपाइको उब्जनी हुनेछ । जीवात्मा आफैँ आफ्नो निर्माता हो । त्यसैले निष्ठुर बन्ने, छल गरेर कसैको चरित्र भङ्ग गरिदिने, नचाहिँदो कुरामा रिसले आगो भएर । अबोध बालबालिकाहरूमा, निरीह जीवजगत्मा श्रापको भयँर बज्रपात गरिदिने जस्तो सिकारूहरूबीच चर्चा हुने स्वरूप परमात्माको हुन सक्तछ भन्ने कल्पना नै आउन सक्तैन । 'यत्ते रूपं कल्याणतम् तत्तेपश्यामि' भनेर परमात्माको सर्वकल्याणकारी स्वरूपको दर्शन गर्ने लालसा साधकले यस मन्त्रमा व्यक्त गरेका छन् । परमात्मा त सधैँ कृपामय छन्, सम्पूर्ण सृष्टिचक्र नै उनको कृपाप्रवाह हो । उनी सबैका जीवनदाता हुन् । जीवन दिएर, जीवनोपयोगी साधन दिएर उनी छिनछिन प्राणीहरूको कल्याण गरिरहेका हुन्छन् । वास्तवमा आफूप्रति कुनै सद्भाव नराख्नेलाई समेत स्नेह दिनसक्नुहुन्छ भगवान् । किन कि उहाँ समदर्शी हुनुहुन्छ । त्यसैले उहाँको सृष्टिमा ज्ञानी र अज्ञानीले पनि दुवैले खानबस्न पाएका हुन्छन् । ज्ञानतिर लाग्नेले आफ्नै हिसाबले उन्नति गर्दछ, अज्ञानीले आफ्नो अज्ञानको फल भोग्दछ । यो पनि एक दिन राम्रो बाटोमा लाग्ला, सुकर्म गर्ला, आफूलाई सुधार्ला भनेर परमात्मा नरिसाई, निराश नभई, अज्ञानीलाई पनि आश्रय दिनुहुन्छ । किनभने उहाँ चराचर जगत्का पिता हुनुहुन्छ । 'पितासि लोकस्य चराचरस्य ।' यही हाम्रा साधनाशास्त्रहरू भन्दछन् ।

हो, दुष्टताको बाटो हिंड्नेले सजाय पाउँछ, त्यो पनि उसको आफ्नै कर्मको फल हो । सज्जनताको बाटो हिंड्नेलाई यत्रतत्र स्वागत हुन्छ, सम्मान मिल्दछ त्यो पनि उसको आफ्नै कर्मको फल हो । परमात्मा त जीवन दिन्छन्, प्रकाश दिन्छन्, साधन दिन्छन् । जीवात्माले तिनको सदुपयोग गर्नुपर्दछ । परमात्माले यति दिएका हुन्छन्, केवल तिनको सदुपयोग गरे जीवात्मा उन्नतिको भागी हुन्छ । तर विवेकहीन बनेर जीवनदाताले दिएका उत्तमोत्तम साधनहरूको जब ऊ दुरुपयोग गर्न थाल्दछ अनि उसको ओरालो सुरु हुन्छ । यस पवित्र मन्त्रले यिनै तथ्यहरूमा प्रकाश पार्दछ ।

सोह्रौं मन्त्रको अन्तिम चरणमा साधनासंसारको अति महत्त्वपूर्ण कुरा बताइएको छ- 'योऽसावसौ पुरुषः सोऽहमस्मि'। यसको तात्पर्य हो आध्यात्मिक साधनाद्वारा जीवनको पूर्णता प्राप्त गर्न चाहने प्रत्येक साधकले जाति, वर्ण, लिङ्ग, साम्प्रदायभन्दा माथि उठेर, शरीरको साढे तीन हातको सीमालाई नै आफ्नो स्वरूप सम्झिने कुण्ठित चिन्तनबाट माथि उठेर आफ्नो मूल स्वरूपको परिचयप्रति अभिमुख बन्दै जीवनको पूर्णलाभ प्राप्त गर्नुपर्दछ । प्रत्येक मानव यस्तो बाटो हिंडोस् जसबाट उसलाई अनुभव हुन सकोस् म अनन्तको, अभिनाशीको पूर्णतमको अंश हुँ । शरीर नाशवान् छ तर म हैन, म त अजर-अमर आत्मा हुँ । शरीर नष्ट हुन्छ तर म अविनाशी छु, यो देश परिवर्तित हुन्छ तर म अपरिवर्त्य छु, सनातन छु, मृत्युरहित छु । अमृतको प्राप्ति, अनन्तको अनुभूति गर्न यो पावन मन्त्रमा साधकलाई उद्‌बोधन प्रदान गरिएको छ 'योऽसावसौ पुरुषः सोऽहमस्मि' भनेर ।

यहाँ एउटा जिज्ञासा स्वाभाविक रूपले उठ्छ । परमात्माका पूर्णतमको अविनाशीको अंशका रूपमा आफूलाई अनुभव

गर्नुको प्रत्यक्ष लाभ जीवनमा के हुन्छ ? सफल जीवन जिउन यसले के-कस्तो योगदान पुऱ्याउँछ ? यसको उत्तर हो मानिसको जीवन कस्तो बन्ने हो, कुन रूपमा विकसित बन्ने हो भन्ने सम्पूर्ण कुरा उसको अनुभूतिको स्तरमा निर्भर गर्दछ । जसले केवल भौतिकतामा जीवन भेट्तछ, खानेपिउने जस्ता शारीरिक सुखका कुरामा नै जीवनको सार्थकता ठानिरहेको हुन्छ, न तपस्या छ न विद्या, न ज्ञान छ न साधना उसको सम्पूर्ण चिन्तनक्रम आफ्नो अनुभूतिअनुसार भौतिक उपलब्धि पक्षमै अलमलिएर यान्त्रिक बन्न पुगिरहेको हुन्छ । भौतिक क्षेत्र जस्तो नाशवान् छ, क्षणिक छ, परिवर्तनशील छ त्यस्तै नाशवान्, क्षणिक परिणाम प्राप्त गर्ने कर्महरूमा नै संलग्न बनेर उसको जीवनको व्यय भइरहेको हुन्छ । कुनै महान् प्रेरणादायी समष्टि कल्याणमा सहयोग पुऱ्याउने उल्लेखनीय सेवा उपलब्ध गराउने श्रेयस्कर कार्य सम्पन्न गर्न नसकी जीवनको अनमोल अवसर बित्दछ । तर जसको अनुभूतिमा आफ्नो व्यापक, अविनाशी सच्चिदानन्दमय सनातन आत्मरूप रहन्छ ऊ शरीरमानव बन्ने कुण्ठित रूपबाट माथि उठेर आत्ममानव बन्ने सुन्दर बाटोमा अघि बढिरहेको हुन्छ । परमात्माको, व्यापक परमेश्वरको अंशको अनुभूतिद्वारा ऊ त्यस्तै पावन कार्यमा अग्रसर बन्दै आफ्नो अनुभूतिअनुसार नै स्थायी अविनाशी, अमृतमय परिणाम प्राप्त गर्ने शुभकर्महरूमा नै जीवनको क्षणक्षण र कणकणको सदुपयोग गर्दै आफ्नो जीवनद्वारा समष्टि कल्याणको समुज्जवल प्रेरणा छर्दै सुन्दरपूर्ण जीवनको वास्तविक फल प्राप्त गरेर धन्य बन्दछ । कुमालकोठी भन्ने कीरो प्रकृतिको विधानअनुसार कमिलोबाट कुमालकोठी बन्न पुगेको हुन्छ । कमिलाको सानो बच्चो कुमालकोठीको आफ्नो गुँडमा लगेर राख्दछ । त्यस बच्चाको वरिपरि कुमालकोठी भुनभुन गरेर उडिरहन्छ । बाहिर आउन खोज्दा टोक्दछ, ठुङ्दछ र बारम्बार भित्रै बस्न प्रेरित गर्दछ ।

भयभीत भएर कमिलाको बच्चो कुमालकोठीकै चिन्तनमा तल्लीन बन्दै जान्छ । अनि यसरी कुमालकोठीको गुडभित्रको त्यो कमिलाको बच्चो छिनछिनको चिन्तन र अनुभूतिद्वारा उस्तै रूप प्राप्त गरेर एक दिन साँच्चिकै कुमालकोठी नै बन्न पुग्दछ । यसैलाई लक्ष्य गरेर साधनाशास्त्रहरूले भनेका हुन्- 'यादृशी भावना यस्य सिद्धिर्भवति तातृशी ।' अर्थात् जसको जस्तो भावना छ, उसले जीवनमा प्राप्त गर्ने उपलब्धि पनि, सिद्धि पनि त्यस्तै हुन्छ ।

त्यसैले परमात्माको अंशका रूपमा सच्चिदानन्दमय आत्माका रूपमा आफ्नो स्वरूपको वास्तविक परिचयको सबै अनुभूति राख्ने साधकले आफ्नो जीवनलाई विवेकको उज्यालो प्रकाशमा निरन्तर समुन्नत बनाउँदै शुभकर्महरूद्वारा आफूलाई पूर्णताको भागी बनाउँछ । ऊ साधन के हो र साध्य के हो ठम्याउन सक्ने हुन्छ । मानिस लाई धन किन चाहिन्छ ? जीवनका लागि सुखसुविधा किन चाहिन्छ ? जीवनको समुन्नतिका लागि यी सबै भौतिक साधनहरू साधनका रूपमा आवश्यक हुन्छन् । तर साध्य, लक्ष्य चाहिं जीवन हो, आत्मविकास हो । आज गर्न चाहेको प्रभुकार्य, सेवाकार्य समाजको हित हुने कार्य, धर्मसंस्थापनको कार्य साधनको कमीले गर्दा गर्न सकिएन, साधन भएमा राम्ररी गर्न सकूँला भनेर साधन चाहिएको हो । साधनका लागि साधन चाहिएको होइन । त्यसैले नाशवानको उपयोग, अविनाशीको प्राप्ति । यही हो आध्यात्मिक साधनाबाट मानवले प्राप्त गर्ने सर्वोत्तम फल । यसैका लागि यस पावन मन्त्रले सम्झाएको छ- 'अनुभव गर म परमपुरुषोत्तम श्रीहरिको अंश हुँ सत् हुँ, चित् हुँ, आनन्द हुँ । त्यहीं मैले पुग्नुछ । 'योऽसौ पुरुषः सोऽहमस्मि ।'

मूल कुरा सत्य-धर्मको संरक्षणमा हाम्रो सम्पूर्ण जीवनको सदुपयोग हुनुपर्दछ । हामी भगवान्का सन्तान अंश हौं भगवान्

हामी सबैका अंशी हुनुहुन्छ । अंशले अंशी जस्तै बन्नुछ । भगवान् यस धर्तीमा धर्मसंस्थापनका लागि बारम्बार आइरहनुहुन्छ । 'धर्मसंस्थापनार्थाय सम्भवामि युगेयुगे' भगवान् भन्नुहुन्छ । त्यसैले भगवान्ले त्यत्ति श्रद्धासाथ, त्यति तत्परतासाथ युगैपिच्छे धर्तीमा आएर संस्थापन गर्न चाहेको सत्यधर्मको संरक्षणमा केही चिन्तन र केही साधन हाम्ले लगाउन सकेमा हामीले प्रभुको साँचो सेवा गरेका हुन्छौं । प्रभुका भएर प्रभुको कार्य गरेर जान सक्ने बन्नका निम्ति नै यस्तो आत्मिक परिचय आवश्यक हुन्छ । हामीले अनुभव गर्नु छ 'योऽसाबसौ पुरुषः सोऽहमस्मि' ।

वस्तुतः हाम्रो श्वास-श्वासमा यही जपना चलिरहेको हुन्छ 'सोऽहम् हंसः' 'सोऽहम् हंसः' । भित्र सास तान्दछौं अहम्को ध्वनि हुन्छ, बाहिर सास छोड्छौं सः को शब्द भइरहेको हुन्छ ।

'हाम्रो मूल त्यही परमात्मसत्ता हो, हामी त्यसै परमात्मातत्त्वका अंश हौं ।' शारीरिक स्थितिले पनि सधैं यही रटना गरिरहेको हुन्छ । तर हामी अनुभूतिकोटिमा त्यसलाई ल्याउन सक्तैनौं । त्यसैले आध्यात्मिक समुन्नतिमा पछि परेर हामी सानो घेराभित्रै थुनिएर अज्ञानको जीवनयापन गरिरहेका हुन्छौं । यस स्थितिबाट माथि उठेर हामीले स्वयंको सही परिचय प्राप्त गरी समय र साधनको नित्य शुभकर्ममा सदुपयोग गर्दै समष्टिको हित हुने मङ्गलमय सेवाकार्य सम्पन्न गरेर जीवनको पूर्णता प्राप्त गर्नुछ । यही यस पावन मन्त्रले बताउँछ ।

# सत्रौं मन्त्र

सत्रौं मन्त्रमा जीवात्माको यो व्यष्टि जीवन त्यही समष्टि जीवनको, परमात्म सत्ताको अविभाज्य अङ्ग हो भन्ने कुरा बताइएको छ । यस शरीरका घटक सबै पदार्थहरू त्यही अनन्त असीम समष्टि सृष्टिका अविभाज्य हिस्सा हुन् । यस शरीररूप यन्त्रद्वारा जेजति गर्न सकिन्छ त्यो त्यही अनादि अनन्त सृष्टिविधानकै अङ्गका रूपमा सम्पन्न भएको हुन्छ । त्यस मूल सत्तासित सम्बन्ध तोडेर न कोही यस सृष्टिमा रहन सक्दछ, न त त्यसभन्दा बाहिर कहीं जाने ठाउँ नै रहन्छ । यसै सत्यको अनुभूति यस मन्त्रमा व्यक्त गरिएको छ ।

**वायुरनिलममृतमथेदं भस्मान्तं शरीरम् ।**
**क्रतो स्मर कृतं स्मर क्रतो स्मर कृतं स्मर ॥१७॥**

**सरल अर्थ**

अब यी मेरा प्राणहरू त्यही अनन्त प्राणमा विलीन होऊन् । अन्त्यमा भस्ममा परिणत हुने यो नश्वर शरीर पनि त्यही अमृत, अजर, अमर, अनन्त सत्तामा विलीन होओस् । हे यज्ञस्वरूप भगवन् ! मैले यस जीवनमा अपेक्षाअनुसार प्रभुकार्य के-कति गर्न सकँ कृपया सम्झिदिनुहोस् । हे परममङ्गलमय सच्चिदानन्दघन प्रभो ! यस यज्ञरूप सृष्टिविधानभित्र मनुष्यका रूपमा प्रकट भएर मैले जे-जस्ता शुभकर्महरू सम्पन्न गर्ने सुअवसर पाएँ तिनमाथि दृष्टि पारिदिनुहोस्, तिनको मूल्याङ्कन गरिदिनुहोस् ।

## तात्पर्य

साँचो जीवन जिउनेहरूका निमित्त यज्ञ अलग हुँदैन, जीवन नै यज्ञ हुन्छ । धर्म अलग हुँदैन, व्यवहार नै धर्म हुन्छ । मुक्तिको ढोका अन्त हुँदैन, मनुष्य जीवनको मुक्तिको ढोका हुन्छ । सम्पूर्ण सृष्टि यज्ञरूप छ । सृष्टिका सम्पूर्ण उपकरणहरू त्यस यज्ञविधानका सहायक छन् । भगवान् सम्पूर्ण यज्ञहरूका अधिष्ठाता हुनुहुन्छ । हामी यज्ञरूप यस सृष्टिमा परमात्माको शाश्वत आराधनाका लागि आएका हुन्छौं । 'यज्ञेन यज्ञमयजन्त देवा स्तानि धर्माणि प्रथमान्यासन्' भनेर पुरुषसूक्तद्वारा वेदले यही पारमार्थिक सत्यप्रति ध्यान आकर्षित गरेका छन् । यज्ञरूप जीवनद्वारा यज्ञका साधनरूप सृष्टिका उपकरणहरू अर्पण गरेर यज्ञस्वरूप भगवान्को आधरना देवताहरूले गरेका थिए । यही सर्वप्रथम परमधर्म मानिएको थियो । 'तानि धर्माणि प्रथमान्यासन्'

जसले जीवनमा प्रभुप्रति सधैं प्रीति राखेको हुन्छ, प्रभुसेवाको भावनाले शुभकर्महरू गरेर जसको जीवन बितेको हुन्छ तिनलाई प्रभु स्वयं सम्झिदिनुहुन्छ । साधनासंसारमा पाइला बढाउने प्रत्येक साधकका लागि यो सर्वोत्तम सौभाग्य हो । ऋषि यहाँ-यहाँ सौभाग्यपूर्ण जीवनको माग गरिरहेका छन्- 'प्रभो ! म यस्ता पावन कर्म गरेर जीवनयापन गर्न सकौं जसले गर्दा हजूरमा म र मेरो कर्मको सम्झना हुन सकोस् । हजुरले त वचन दिनुभएको छ मेरो भक्तले जीवनभर मलाई सम्झेर पनि यदि आखिरी अवस्थामा कफ, वात र पित्तले बाधित भएर मलाई सम्झिन सकेनछ नै भने पनि मेरो भक्तलाई म आफैं सम्झन्छु र उत्तम गतिमा पुऱ्याइदिन्छु ।

'यदि वातादिदोषेण मद्भक्तो मां च न स्मरेत् । अहं स्मरामि मद्भक्तं नयामि परमां गतिम् ।' त्यसैले प्रभो ! म त्यस्ता सौभाग्यशाली भक्तहरूको पङ्क्तिमा समावेश हुन सक्ने बनूँ । मलाई र मैले गरेका सत्कर्मलाई प्रभुको कृपापूर्ण संस्मरणको विषय बन्ने सुअवसर प्राप्त होओस् । यही यस पावन मन्त्रमा व्यक्त गरिएको छ । 'क्रतो स्मर कृतं स्मर क्रतो स्मर कृतं स्मर' भनेर ।

# अठारौं मन्त्र

अब ईशावास्य उपनिषद्को अठारौं र अन्तिम मन्त्रबारे विचार गरौं । अठारौं मन्त्रमा कल्याणकारी मार्गबाट सम्पन्न जीवनको, उच्चतम लक्ष्यको प्राप्तिमा सहायता गरिदिन प्रभुश्रीहरिसँग हार्दिक प्रार्थना गरिएको छ । व्यावहारिक क्षेत्रमा पनि असल बाटोबाट कल्याणकारी शुभकर्म गर्दै सम्पन्न जीवन जिउने र पारमार्थिक स्थितिमा पनि पवित्र साधनापूर्वक भगवत्प्राप्तिरूप सर्वोत्तम सम्पत्ति प्राप्त गरेर धन्य-धन्य बन्ने सुन्दर र सफल जीवनका निम्ति यस मन्त्रमा भगवान्सँग प्रार्थना गरिएको छ ।

**अग्ने नय सुपथा राये अस्मान् विश्वानि देव वनुनानि**
**विद्वान् । युपोध्यस्मज्जुहुराणमेनो भूयिष्ठां ते नम उक्तिं विधेम ॥१८॥**

**सरल अर्थ**

प्राणीमात्रका मार्गदर्शक अग्निरूप परमात्मन् ! हामी सबैका सबै कर्महरूलाई तपाईं एक-एक गरेर जान्नुहुन्छ । त्यसैले हे प्रभो ! हामीलाई व्यावहारिक जीवनमा शुभमार्गबाट सम्पन्नतातिर अगि बढाइदिनुहोस् । हामी निर्धन, गरीब भएर बस्नु नपरोस् । साथै सम्पन्नताको बाटोमा जाँदा पनि विपरीत मार्गबाट होइन असल बाटोबाटै जान सकौं । हामीलाई सुबाटोबाट सम्पन्नतातिर लम्कनमा बाधक बनिदिने नराम्रो भवना र खराब कर्मरूप पापलाई हटाइदिनुहोस् । हामी तपाईंलाई यस निम्ति बारम्बार नमस्कार गर्दछौं । मन्त्रकै अर्थमा अर्को पक्ष पारमार्थिक पक्ष पनि छ जो यस

प्रकार छ- ऋषि भन्दछन्, 'हे भगवान् ! हामीलाई अर्चिरादिको सुन्दर प्रकाशमय बाटोबाट परमसम्पत्तिस्वरूप हजुरको दिब्य धाममा पुऱ्याइदिनुहोस् । हजुर हाम्रा सम्पूर्ण कर्महरूलाई राम्ररी जान्नुहुन्छ । हामीले जानी-नजानी जे-जस्ता कर्म गऱ्यौं सबैका साक्षी परमकृपालु प्रभुलाई सबै थाहा छ । हामीलाई भगवत्प्राप्तिको बाटोमा प्रतिबन्धक भइदिने पापरूप बाधा हटाइदिनुहोस् । यसनिम्ति नमस्कारपूर्वक हामी प्रभुमा बारम्बार विन्ती गर्दछौं ।'

## तात्पर्य

अग्नि प्रकाश र ज्ञानका देवता हुन् । अग्निलाई पनि प्रकाश दिने सर्व प्रकाशदाता स्वयं प्रकाश भगवान् श्रीहरि हुनुहुन्छ । त्यसैले यहाँ अग्नि शब्दले भगवान्‌लाई सम्बोधित गरिएको छ । सबैलाई ज्ञानको प्रकाश दिएर अगाडि लैजाने हुनाले नै परमात्मालाई 'अग्नि' भनिएको हो । 'अग्रे-अग्रे नयतीति अग्निः' भनेर यस शब्दको व्युत्पत्ति गरिएको छ । त्यसैले वैदिक धर्मसंस्कृतिमा कुनै पनि संस्कार गर्दा अग्निदेवकै साक्षित्वमा गर्ने परम्परा रहिआएको छ ।

यसरी यस मन्त्रमा व्यावहारिक र पारमार्थिक दुवै स्थितिमा उत्तम लक्ष्य प्राप्तिका निमित्त प्रभुमा प्रार्थना गरिएको छ । जसको व्यावहारिक जीवन राम्रो छ, पारमार्थिक सफलता पनि त्यसैलाई प्राप्त हुन्छ । जसले शुभकर्महरू गरेर जीवनमा पवित्रता भर्न सक्दैन, सम्पत्तिको भोकमा जे चाह्यो त्यो गरेर आफूलाई अपवित्र तुल्याउँछ त्यसलाई भगवत्प्राप्तिको सौभाग्य प्राप्त हुँदैन । क्षणिक लैङ्गिक सम्पन्नता मिल्न सक्तछ तर आफ्नो शाश्वत जीवनको

परमसुखको अनुभूतिबाट सदासदाका लागि टाढा भइरहन्छ । किनभने अशुभ कर्महरूले आध्यात्मिक मुक्तिमा बाधा पार्दछन् र जीवात्मा अनेकौं निम्नकोटिका योनिहरूमा भट्किन पुग्दछ । त्यसैले सम्पन्नता अवश्य प्राप्त गर्नुछ तर सत्मार्गलाई छाडेर होइन । शुभमार्गबाटै अघि बढेर सत्यधर्मको प्रकाशमा नै अघि लम्केर सम्पन्नता प्राप्त गर्नुछ । यसरी अपवित्रताद्वारा जीवन कलुषित हुन नदिईकन जसले भगजत्शरणगति ग्रहण गरेर भगवद्भक्तिको उज्यालोमा आफ्नो जीवनयात्रा चलाएका हुन्छन्, अन्तमा भगवद्कृपाद्वारा अर्चिरादि मार्ग हुँदै प्रभुको परमपदमा पुग्ने सौभाग्य तिनैलाई प्राप्त हुन्छ । यस्तै सौभाग्यशाली जीवनका निम्ति यस पावन मन्त्रमा प्रार्थना गरिएको छ ।

ईशावास्य उपनिषद्को पहिलो मन्त्र र अन्तिम मन्त्रलाई मिलाएर लियो भने पूर्ण जीवनका निम्ति सुन्दर साधनामार्ग प्राप्त हुन्छ । 'सम्पूर्ण विश्व प्रभुको निवास हो र जे छ सबै प्रभुमा नै आश्रित छ । त्यसैले प्रभुलाई सधैं सम्झेर उहाँलाई अर्पण गरेर मात्र कुनै कुरा लिने गर । अरू कसैको धनमा कहिल्यै लोभ नगर भन्ने प्रथम मन्त्र र हामीलाई असल मार्गबाट लक्ष्यमा अगि बढाइदिनुहोस् भन्ने अन्तिम मन्त्रको अर्थ मिलाएर हेर्दा भगवद्भक्ति पहिलो कर्तव्यका रूपमा आउँछ । आफ्नै पसिनाको बलमा स्वावलम्बी बनेर जिउनु दोस्रो कर्तव्य ठहर्छ र हरप्रकारबाट जीवनमा पवित्रता कायम गर्दै अन्त्यमा प्रभुप्राप्ति गरेर जीवनको पूर्णता प्राप्त गर्नु अन्तिम कर्तव्यका रूपमा स्पष्ट हुन्छ । साधनाको मार्ग सिकाउने यी पावन मन्त्रहरूले बताएको शुद्ध, सुन्दर, कल्याणकारी जीवननिर्माणमा

अग्रसर बन्दै स्वयं पनि धर्मको अनुसरण गरौं र सामाजिक जीवनमा धर्मलाई प्रतिष्ठापित गर्ने कार्यमा सहयोगी बन्न सकौं, नेपाल आमाको विश्वगामी रूपमा रहिआएको उज्ज्वल प्रतिष्ठा अझ समुज्ज्वल बन्न सकोस् यही हामीले सधैं प्रार्थना गर्नुछ ।

ॐ असतो मा सद् गमय, तमसो मा ज्योतिर्गमय मृत्योर्मा अमृतं गमय । ॐ शान्तिः, शान्तिः शान्तिः ।

**समाप्त**

# प्रभुको सार्वभौम आश्वासन

अनन्याश्चिन्तयन्तो मां ये जनाः पर्युपासते ।

तेषां नित्याभियुक्तानां योगक्षेमं वहाम्यहम् ॥

अर्थ- मलाई अनन्य हृदयले चिन्तन गर्दै जो सब प्रकारबाट मेरै उपासना गर्दछन् त्यस्ता नित्य मैमा समर्पित भक्तजनहरूको योगक्षेम म पूरा गरिदिन्छु ।

- भगवान् श्रीकृष्ण

